२ नक्षत्र दिनु त्यसको फल स्वादिष्ट जल हुन्छ। पूर्वादि आठदिशामा ३।३ नक्षत्र दिनु, त्यसको फल लेखिन्छ। पूर्वमा परे खण्डित जल हुन्छ। आग्नेयमा परे स्वादिष्ट जल हुन्छ। दक्षिणमा परे जल क्षय हुन्छ अर्थात् पानी आउन्न। नैर्ऋत्यमा परे स्वादु जल हुन्छ। पश्चिममा परे खारो जल हुन्छ। वायव्यमा परे शिला (ढुङ्गो) निक्लन्छ। उत्तरमा परे मीठो जल हुन्छ। ईशानमा खारो जल हुन्छ। यस्तै प्रकारले सूर्यका नक्षत्रदेखि ३।३ नक्षत्रको फल जान्नु ॥ १०८ ॥




❀ द्वितीयप्रकारेण कूपचक्रम् ❀

रोहिण्यादि लिखेच्चक्रं त्रयं मध्ये प्रतिष्ठितम् ।
पूर्वादिदिक्षु सर्वासु सृष्टिमार्गेण दीयते ॥१०९॥
मध्ये शीघ्रजलं स्वादु पूर्वे भूमिश्च खण्डिता ।
आग्नेय्यां सुजलं प्रोक्तं दक्षिणे निर्जलं तथा ॥११०॥
नैर्ऋत्ये चामृतं वारि पश्चिमे शोभनं जलम् ।
वायव्येऽपि जलं हन्ति चोत्तरे स्वादुकं जलम् ॥१११॥
ईशाने कटुकक्षारं ह्यल्पतीक्ष्णस्य सम्भवः ॥११२॥

रोहिणी देखि लिएर दिनका नक्षत्र सम्म कूप चक्र गर्नू। मध्यमा ३ नक्षत्र स्थापना गर्नू, अनि पूर्वादि आठ दिशामा ३।३ नक्षत्र

दिनू। त्यसको फल लेखिन्छ। मध्यमा परे शीघ्र स्वादुजल निक्लन्छ, पूर्वको जग्गामा भासिने अर्थात् खण्डित हुनेछ। आग्नेयमा राम्रो जल आउनेछ, दक्षिणमा निर्जल नैर्ऋत्यमा मधुरजल पश्चिममा शोभनजल वायव्यमा निर्जल उत्तरमा मधुरजल, ईशानमा खारो जल हुन्छ, त्यो पनि थोरै र काम नलाग्ने हुन्छ ॥ १०९–११२ ॥

* कूपचक्रन्यासः *




* तृतीयप्रकारेण भौमभात्कूपचक्रम् *

शशिशराब्धित्रित्र्यब्धिगुणाब्धये
वधजलेषु ससिद्धिरभङ्गदम् ।
रुजमसिद्धियशोऽर्थप्रसिद्धये
जलविभङ्गकरः कुजभादिषु ॥११३॥

मङ्गलका नक्षत्रदेखि दिनका नक्षत्रसम्म कूपचक्र विचार्नू। प्रथम १ मा परे अशुभ जान्नू। फेरि ५ मा शुभफल जान्नू, फेरि ४ मा शुभ जान्नू। फेरि ३ मा रोग हुन्छ। फेरि ३ मा अशुभ जान्नू। फेरि ४ मा यश हुने जान्नू। फेरि ३ मा अर्थ सिद्धि जान्नू। फेरि ४ मा जलभङ्ग हुने जान्नू ॥ ११३ ॥

* भौमभात्कूपचक्रन्यासः *

| १ | ५ | ४ | ३ | ३ | ४ | ३ | ४ | नक्षत्र |
|---|---|---|---|---|---|---|---|---|
| अशुभ | शुभ | शुभ | रोग | अशुभ | यश | अर्थसिद्धि | अंगभङ्ग | फल |

* चतुर्थप्रकारेण कूपचक्रं राहुभात् *

राहुस्थभात्त्रयं पूर्वे त्रयमाग्नेयतः क्रमात् ।
मध्ये चत्वारि तारान्ते फल वाच्यं शुभाशुभम् ॥११४॥
पूर्वे शोककरं राहुराग्नेय्यां जलदःसदा ।
दक्षिणे स्वामिमरणं नैर्ऋत्यां दुःखदायकम् ॥११५॥
पश्चिमे सुखसौभाग्यं वायव्ये जलवर्द्धनम् ।
उत्तरे निर्जलं विद्यादीश्वरे जलसिद्धिदम् ॥११६॥
मध्ये च सजलं वाच्यं नान्यथा रुद्रभाषितम् ।
कूपचक्रं प्रवक्ष्यामि विज्ञेयं सर्वदा बुधैः ॥११७॥

राहुका नक्षत्रदेखि दिनका नक्षत्रसम्म कूपनक्षत्र विचार गर्नू। प्रथम ३ नक्षत्र कूपका पूर्वदिशामा दिनु, अरु ३ नक्षत्र आग्नेय आदि दिशामा स्थापन गर्नु र बाँकी पछाड़िका चार ४ नक्षत्र मध्यमा स्थापन गर्नू। त्यसको फल पूर्वमा राहु परेमा शोक गर्दछ, आग्नेयमा जल संपदा हुन्छ। दक्षिणमा स्वामीको मरण हुन्छ। नैर्ऋत्यमा दुःख प्राप्ति हुन्छ। पश्चिममा सुखसौभाग्य हुन्छ। वायव्यमा जलको वृद्धि हुन्छ। उत्तरमा निर्जल हुन्छ। ईशानमा जलसिद्धि हुन्छ। मध्यमा पर्‍यो भने जल निक्लन्छ। यसमा अन्यथा वचन हुँदैन। श्रीमहादेवजी आज्ञा गर्नु हुन्छ कि आफ्नैरूपले राहु सदा फल दिन्छ। पृथ्वीमा यो कूपचक्र जो कहियो यसैबाट पण्डितहरुले सबै विचार गरुन् ॥ ११७ ॥

* राहुभात्कूपचक्रन्यासः *

| पू० | आ० | द० | नै० | प० | वा० | उ० | ई० | मध्य | दिशा |
|---|---|---|---|---|---|---|---|---|---|
| ३ | ३ | ३ | ३ | ३ | ३ | ३ | ३ | ४ | नक्षत्र |
| अ० | शु० | अ० | अ० | शु० | शु० | अ० | शु० | शुभ | फल |

* कूपमुहूर्त्तः *

हस्तात्तिस्रो वासवं वारुणं च
मित्रं पित्र्यं त्रीणि चैवोत्तराणि ।
प्राजापत्यं चापि नक्षत्रमाहुः
कूपारम्भे श्रेष्ठमाद्या मुनीन्द्राः॥११८॥

हस्त, चित्रा, स्वाती, धनिष्ठा, शतभिषा, अनुराधा, मघा, तीनै उत्तरा, रोहिणी यी नक्षत्रमा कुवा खन्ने मुहूर्त शुभ हुन्छ, यस्तो मुनीन्द्र भन्दछन् ॥ ११८ ॥

* गृहमध्ये कूपदिशाफलम् *

कूपे वास्तोर्मध्यदेशेऽर्थनाश-
स्त्वीशानादौ पुष्टिरैश्वर्यवृद्धिः ।
सूनोर्नाशः स्त्रीविनाशो मृतिश्च
संपत्पीडा शत्रुतः स्याच्च सौख्यम् ॥११९॥

घरका मध्य भागमा कुवा खनेमा अर्थ नाश ईशानमा पुष्टता, पूर्वमा ऐश्वर्यवृद्धि, आग्नेयमा पुत्र नाश, दक्षिणमा स्त्रीविनाश, नैर्ऋत्यमा गृहपतिको मृत्यु, पश्चिममा सम्पदा, वायव्यमा शत्रुपीड़ा, उत्तरमा सुखप्राप्ति हुन्छ ॥ २० ॥

* तडागचक्रम् *

तडागे च प्रवक्ष्यामि यदुक्तं ब्रह्मयामले ।
सूर्यभाच्चन्द्रभं यावद्गणयेत्सततं बुधैः ॥१२०॥
दिक्षु ताराद्वये यस्य मध्ये पञ्च नियोजयेत् ।
षड्ऋक्षे वारिवाहे च फलं तत्र विचारयेत् ॥१२१॥
पूर्वे तु बहुशोकश्च आग्नेय्यां सजलं बहु ।
दक्षिणे वारिनाशश्च नैर्ऋत्ये चामृतं जलम् ॥१२२॥

पश्चिमे च जलं स्वादु वायव्ये वारिशोषणम् ।
उत्तरे च स्थितं तोयमीशाने कुत्सितं जलम् ॥१२३॥
मध्ये छिद्रजलं याति वारिवाहेऽतिपूर्णता ॥१२४॥

सूर्यका नक्षत्रदेखि चन्द्रमाका नक्षत्रसम्म गन्नु र तलाउ चक्रको स्थापना गर्नु । पूर्वादि आठै दिशामा २।२ नक्षत्र स्थापना गर्नु, मध्यमा ५ नक्षत्र स्थापना गर्नु, अरु बाँकी ६ नक्षत्र जलस्थमा दिनु र उसको फल विचार गर्नु । त्यसको फल लेखिन्छ, पूर्वदिशामा पऱ्यो भने धेरै शोक हुन्छ । आग्नेयमा धेरै जल, दक्षिणमा जल नाश, नैर्ऋत्यमा मधुर जल, पश्चिममा स्वादिष्ट जल हुन्छ, वायव्यमा जल सुक्छ, उत्तरमा जलस्थित हुन्छ, ईशानमा खारो जल हुन्छ, मध्यमा परे छिद्रजल ( खण्डित जल ) हुन्छ, जलस्थलमा परे पूर्णजल हुन्छ । यो चक्र ब्रह्मयामलमा कहेको छ ॥ १२०-१२४ ॥

* तडागचक्रन्यासः सूर्यभात् *

| पूर्व | आ० | द० | नै० | प० | वा० | उ० | ई० | मध्य | वारि. | स्थान |
|---|---|---|---|---|---|---|---|---|---|---|
| २ | २ | २ | २ | २ | २ | २ | २ | ५ | ६ | नक्षत्र |
| बहुशोक | बहुजल | जलनाश | अमृतजल | स्वादुजल | जलशोष | कुत्सितजल | जलस्थिति | छिद्रजल | पूर्णजल | फल |

* तडागमुहूर्तः *

ध्रुवं वसु जलं पुष्यो नैर्ऋतं मैत्रसंज्ञकम् ।
नक्षत्रं शुभदं ज्ञेयं तडागे सर्वदा बुधैः ॥१२५॥

ध्रुवसंज्ञक, धनिष्ठा, पूर्वाषाढ़ा, पुष्य, मूल, मैत्रसंज्ञक यी नक्षत्रमा तलाउ खन्न आरम्भ गर्नु शुभ हुन्छ ॥ १२५ ॥

* जलाशयमुहूर्तः *

अनुराधामघाहस्तरेवतीषूत्तरात्रये ।
रोहिणीयुगले पुष्ये धनिष्ठाद्वितये तथा ॥१२६॥
पूर्वाषाढाभिधेनैव शुभे मासि शुभे दिने ।
वापीकूपतडागानामारम्भः कथितो बुधैः ॥१२७॥

अनुराधा, मघा, हस्त, रेवती, तीनै उत्तरा, रोहिणी, मृगशिरा, पुष्य, धनिष्ठा, शतभिषा, पूर्वाषाढ़ा यी नक्षत्र र शुभ मास अनि शुभ दिनमा बावली, कुवा, तलाउ खनाउनु शुभ हुन्छ ॥ १२७ ॥

* वापीमुहूर्तः *

स्वात्यश्विपुष्यहस्तेषु मैत्रे चैव पुनर्वसौ ।
रेवत्यां वारुणे चैव वापीकर्म प्रशस्यते ॥१२८॥

स्वाती, अश्विनी, पुष्य, हस्त, अनुराधा, पुनर्वसु, रेवती, शतभिषा यी नक्षत्रमा बावलीको कार्य शुभ हुन्छ ॥ १२८ ॥

* कार्यभेदेन जन्म-नामराशिनिर्णयः *

देशे ग्रामे गृहे युद्धे सेवायां व्यवहारके ।
नामराशेः प्रधानत्वं जन्मराशेरतः परम् ॥१२९॥

देशको कार्य, ग्रामको कार्य, गृहको कार्य, युद्धकार्य, नोकरी ( चाकरी ) गर्नु, व्यवहार गर्नु यी कार्यमा नामराशि प्रधान हुन्छ। बाँकी अरू जो जो कार्य छन् ती सब कार्य जन्मराशिबाट विचार गर्नु उचित हुन्छ ॥ १२९ ॥

* दीक्षाग्रहणमुहूर्तः *

आर्द्राचित्रात्र्युत्तरे रेवतीन्दु-
ब्राह्मे मित्रे वा धनिष्ठासु दीक्षा ।

आद्या मार्गे फाल्गुने श्रावणोर्जे
माघे वारे मन्दमाहेयहीने ॥१३०॥

आर्द्रा, चित्रा, तीनै उत्तरा, रेवती, मृगशिरा, रोहिणी, अनुराधा, धनिष्ठा यी नक्षत्रमा दीक्षा लिनु शुभ हुन्छ, तथा मार्गशीर्ष, फाल्गुन, श्रावण, कार्त्तिक, माघ यी महीना शुभ हुन्छन्, शनि, मंगलवार वर्जित गर्नु ॥ १३० ॥

* द्वितीयप्रकारेण दीक्षामासफलम् *

मन्त्रस्वीकरणं चैत्रे बहुदुःखफलप्रदम् ।
वैशाखे रत्नलाभश्च ज्येष्ठे च मरणं ध्रुवम् ॥१३१॥
आषाढे बन्धुनाशः स्याच्छ्रावणे च शुभावहम् ।
प्रजाहानिर्भाद्रपदे सर्वत्र सुखमाश्विने ॥१३२॥
कार्तिके धनवृद्धिः स्यान्मार्गशीर्षे शुभप्रदम् ।
पौषे तु ज्ञानहानिः स्यान्माघे मेधाविवर्द्धनम्॥१३३॥
फाल्गुने सुखसौभाग्यं सर्वत्र परिकीर्त्तितम् ॥१३४॥

चैत्र मासमा दीक्षा लियो भने अत्यन्त दुःख प्राप्त हुन्छ। वैशाखमा दीक्षा ग्रहण गर्नाले रत्न लाभ, ज्येष्ठ मासमा मरण, अषाढ़मा बन्धुनाश, श्रावणमा शुभप्रद, भाद्रपदमा पुत्रहानि, आश्विनमा सर्वसुख, कार्तिकमा धन वृद्धि, मार्गशीर्षमा शुभदायक, पौषमा ज्ञानहानि, माघमा ज्ञान वृद्धि र फाल्गुनमा दीक्षा ग्रहण गर्दा सुख सौभाग्य प्राप्त हुन्छ ॥१३१-१३४॥

* तैलाभ्यङ्गमुहूर्तफलम् *

तैलाभ्यङ्गे रवौ तापः सोमे शोभा कुजे मृतिः ।
बुधे धनं गुरौ हानिः शुक्रे दुःखं शनौ सुखम् ॥१३५॥

आइतवार तेल मालिस गर्दा ज्वर आउँछ, सोमवार शोभा, मङ्गलवार मृत्यु, बुधवार धनप्राप्ति, बृहस्पतिवार धनहानि, शुक्रवारमा दुःख र शनिवार जिउमा तेल लगाउनाले सुख प्राप्ति हुन्छ ॥१३५॥

* तैलाभ्यङ्गपरिहारः *

रवौ पुष्पं गुरौ दूर्वा भौमवारे च मृत्तिका ।
शुक्रे तु गोमयं क्षिप्त्वा तैलदोषो न विद्यते ॥१३६॥

रविवार फूल मिलाएर तेल लाउँदा दोष लाग्दैन, मंगलवार माटो, बृहस्पतिवार दूर्वा ( दूवो ) र शुक्रवार गोवर मिलाएर तेल लाउँदा क्यै दोष लाग्दैन ॥१३६॥

* राज्याभिषेकमुहूर्तः *

राज्याभिषेकः शुभमुत्तरायणे
गुर्विन्दुशुक्रैरुदितैर्बलान्वितैः ।
भौमार्कलग्नेशदशेशजन्मपै-
र्नो चैत्ररिक्तारनिशामलिम्लुचे ॥१३७॥
शाक्रः श्रवः क्षिप्रमृदुध्रुवोडुभिः
शीर्षोदये चोपचये शुभस्तनौ ।
पापैस्त्रिषष्ठायगतैः शुभग्रहैः
केन्द्रत्रिकोणायधनत्रिसंस्थितैः ॥१३८॥
पापैस्तनौ रुङ् निधने मृतिसुते
पुत्रार्तिरर्थव्ययगैर्दरिद्रता ।
स्यात्खेऽलसो भ्रष्टपदो द्युनाम्बुगैः
सर्वं शुभं केन्द्रगतैः शुभग्रहैः ॥१३९॥

गुरुर्लग्नकोणे कुजारौ सितः खे
स राजा सदा मोदते राजलक्ष्म्या ।
तृतीयायगौ सौरिसूर्यौ खबन्ध्वो-
र्गुरुश्चेद्धरित्री स्थिरा स्यान्नृपस्य ॥१४०॥

राजगद्दी ( सिंहासन ) मा बस्ने मुहूर्त कहिन्छ । उत्तरायणका सूर्य हउन् । बृहस्पति, चन्द्रमा, शुक्र उदय हुन्, फेरि मङ्गल, सूर्य र जन्म-लग्नको स्वामी महादशा आदिका स्वामी अनि जन्मराशिको स्वामी, यी ग्रह वली हउन् अर्थात् उच्चादि पदमा प्राप्त हउन् अथवा मित्रका घरमा हउन् वा आफ्नै घरमा हउन्, मित्रग्रहको दृष्टि भएमा वली जान्नु । चैत्रमास र रिक्ता तिथि वर्जित गर्नु । फेरि मङ्गलवार, रात्रिको समय अनि मलमास पनि वर्जित गर्नु । जेष्ठा, श्रवण, क्षिप्र-संज्ञक, मृदुसंज्ञक, ध्रुवसंज्ञक यी नक्षत्र शुभ हुन्छन् । फेरि शीर्षोदयी उपचय लग्न हउन् अर्थात् मिथुन, कन्या, तुला, वृश्चिक, कुम्भ यी लग्न शीर्षोदय कहिन्छन् । अब उपचय लग्न लेखिन्छ । जन्म लग्न-देखि र जन्मराशि देखि तेस्रो, छैठौं, दशौं, एकादशौंमा जो हुन्छ त्यसैलाई उपचय लग्न भन्दछन् । फेरि शुभ ग्रहहरूको लग्न हवस्, पापग्रह तेस्रो, छैठौं, एकादशौं स्थानमा हउन् । शुभ ग्रह केन्द्र १।४। ७।१० त्रिकोण ५।९ वा एकादश दोस्रो, तेस्रो स्थानमा हउन् । पाप-ग्रह लग्नमा परे राजालाई रोग हुन्छ । फेरि आठौं पाप ग्रह परे मृत्यु, पाँचौं पापग्रह भए दरिद्रता, दशौं पापग्रह भए अलसी, चौथो र सातौं पापग्रह भए ऐश्वर्य भ्रष्ट हुन्छ । फेरि शुभग्रह केन्द्रमा भए सम्पूर्ण शुभकारी हुन्छ । बृहस्पति लग्नमा वा त्रिकोण ९–५ मा भएर मङ्गल छैठौं होस् । फेरि शुक्र दशौं भए राजा सदा सर्वदा लक्ष्मी ( धन ) ले आनन्दित हुने जान्नू । तेस्रो शनि र एकादश सूर्य, दशौं चतुर्थ स्थानमा बृहस्पति भएका बेला राज्याभिषेक गर्दा राजाको पृथ्वी सदा स्थिर रहन्छ ॥१३७–१४०॥

* पशुक्रयविक्रयमुहूर्तः *

पूर्वामैत्रद्वयं मूल वासवे रेवती करः ।
पुनर्वसुद्वयं ग्राह्यं पशूनां क्रयविक्रये ॥१४१॥

तीनै पूर्वा, अनुराधा, ज्येष्ठा, मूल, धनिष्ठा, रेवती, हस्त, पुनर्वसु, पुष्य यी नक्षत्र पशु बेच्न र किन्न मा शुभ हुन्छन् ॥ १४१ ॥

* नृत्यारम्भमुहूर्तः *

हस्तात्तिस्रो वासवं चानुराधा
ज्येष्ठा पौष्णं वारुणं चोत्तरा च ।
पूर्वाचार्यैः कीर्तिताश्चन्द्रवर्ति-
नृत्यारम्भे शोभनस्त्वृक्षवर्गः ॥१४२॥

हस्त, चित्रा, स्वाती, धनिष्ठा, अनुराधा, ज्येष्ठा, रेवती, शतभिषा, तीनै उत्तरा यी नक्षत्रमा नृत्यारम्भ शुभ हुन्छ । परन्तु चन्द्रमा बली हुनुपर्छ भन्ने आचार्यहरूको वचन छ ॥१४२॥

* ऋणग्रहण ऋणदानमुहूर्तः *

स्वात्यादित्यमृदुद्विदैवगुरुभे कर्णत्रयाश्वे चरे
लग्ने धर्मसुताष्टशुद्धिसहिते द्रव्यप्रयोगः शुभः ।
नारे ग्राह्यमृणं तु संक्रमदिने वृद्धौ करेऽर्केऽह्नि य-
त्तद्वंशेषु भवेदृणं न च बुधे देयं कदाचिद्धनम् ॥१४३॥
तीक्ष्णमिश्रध्रुवोग्रैर्यद्द्रव्यं दत्तं निवेशितम् ।
प्रयुक्तञ्च विनष्टञ्च विष्ट्यां पाते च नाप्यते ॥१४४॥
ऋणग्राहकनक्षत्रं प्रथममृणदस्य भात् ।
द्वितीयमृणसंबन्धो न कर्तव्यः कदाचन ॥१४५॥

स्वाती, पुनर्वसु, मृदुसंज्ञक, विशाखा, पुष्य, श्रवण, धनिष्ठा,

शतभिषा र अश्विनी यी नक्षत्रमा फेरि चर लग्नमा ऋणग्रहण गर्नु शुभ हुन्छ। तर ऋण लिंदामा लग्नदेखि नवौं, पाँचौं, आठौं घरमा कोई ग्रह नहउन्, फेरि मङ्गलवार संक्रांति, वृद्धियोग, हस्त नक्षत्र र रविवार भए उसका वंशमा पनि रहन्छ। फेरि बुधवारमा ऋण दिनु वर्जित हुन्छ। तीक्ष्ण संज्ञक, मिश्र संज्ञक, ध्रुवसंज्ञक र उग्र संज्ञक नक्षत्रमा यदि कसैलाई दियो वा गाड्यो अथवा कसैलाई राख्न दियो भने वा हरायो भने फेरि त्यो धन पाइँदैन यै फल भद्रामा र पातमा पनि जान्नु। यदि ऋणीका नक्षत्रदेखि धनीको नक्षत्र दोस्रो भयो भने ऋण कैल्यै पनि नलिनू ॥४३-४५॥

* हलप्रवाहमुहूर्तः *

मूलद्वीशमघाचरध्रुवमृदुक्षिप्रैर्विनार्कं शनिं
पापैर्हीनबलैर्विधौ जललवे शुक्रे विधौ मांसले।
लग्ने देवगुरौ हलप्रवहणं शस्तं न सिंहे घटे
कर्काजैणधटे तनौ क्षयकरं रिक्तासु षष्ठ्यां तथा ॥१४६॥

मूल, विशाखा, मघा, चरसंज्ञक, ध्रुवसंज्ञक यी नक्षत्रमा हल-प्रवाह शुभ हुन्छ। रविवार र शनिवार वर्जित गर्नु। फेरि पापग्रह बलले रहित हउन्, चन्द्रमा जल राशिका नवांशमा हउन् अर्थात् मकर, कुम्भ, मीन, कर्कट यी जलराशि कहिन्छन् नवांशको क्रम अगाडि लेखिन्छ। शुक्र चन्द्रमा बलवान् हउन् उच्चादि राशिमा वा लग्नमा गुरु हउन् फेरि सिंह, कुम्भ, कर्क, मेष, मकर र तुला यी लग्न वर्जित गर्नु, यिनले नष्ट गर्दछन्। फेरि रिक्ता ४ ९-१४ र षष्ठी यी तिथि पनि क्षयकारकै जान्नु ॥१४६॥

* हलचक्रन्यासः *

| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| ३ | ३ | ३ | ५ | ३ | ५ | ३ | २ | नक्षत्र |
| हानि | वृद्धि | हानि | वृद्धि | हानि | वृद्धि | हानि | वृद्धि | फल |

* वीजोप्तिमुहूर्तस्तथा वीजोप्तिचक्रं तथा हलचक्रम् *

एष्वेव श्रुतिवारुणादितिविशाखोडूनि भौमं विना
बीजोप्तिर्गदिता शुभा त्वशुभतोष्टाग्नीन्दुरामेन्दवः ॥
रामेन्द्वग्नियुगान्यसच्छुभकराण्युप्तौ हलेऽर्कोज्झिता-
द्भाद्रामाष्टनवाष्टभानि मुनिभिः प्रोक्तान्यसत्सन्ति च ॥

पैल्हे हलप्रवाहमा जो नक्षत्रादि कहिएको छ उसमा विउ छर्नें काम पनि गर्नु शुभ हुन्छ, तर श्रवण, शतभिषा, पुनर्वसु र विशाखा यी नक्षत्रमा विउ छर्न वर्जित गर्नु असल हुन्छ। फेरि मङ्गलवार पनि वर्जित हुन्छ, बाँकी सबै तिथि वारादिहरू हलप्रवाहवत् जान्नू॥

अब वीजोप्ति ( बीऊ रोप्ने ) चक्र लेखिन्छ।

राहुले भोगगरेका नक्षत्रदेखि दिनका नक्षत्रसम्म गन्नु र विचार गर्नु। प्रथम ८ नक्षत्र अशुभ हुन्छ। फेरि ३ नक्षत्र शुभ हुन्छ। फेरि १ नक्षत्र अशुभ हुन्छ। फेरि ३ नक्षत्र शुभ हुन्छ। फेरि १ नक्षत्र अशुभ हुन्छ फेरि ३ नक्षत्र शुभ हुन्छ। फेरि १ अशुभ ३ शुभ हुन्छ। पछि अन्त्यका ४ नक्षत्र अशुभ हुन्छन् यसै प्रकारले वीजोप्ति चक्र जान्नू॥१४७॥

* राहुभाद्वीजोप्तिचक्रन्यासः *

| ८ | ३ | १ | ३ | १ | ३ | १ | ३ | ४ | नक्षत्र |
|---|---|---|---|---|---|---|---|---|---|
| अ. | शु. | अ. | शु. | अ. | शु. | अ. | शु. | अ. | फल |

* धान्यछेदमुहूर्तः *

तीक्ष्णाजपादकरवह्निवसुश्रुतीन्दु-
स्वातीमघोत्तरजलान्तकतक्षपुष्ये।
मन्दाररिक्तरहिते दिवसेऽतिशस्ता
धान्यच्छिदा निगदिता स्थिरभे विलग्ने ॥१४८॥

तीक्ष्णसंज्ञक नक्षत्र फेरि पूर्वाभाद्रपद, हस्त, कृत्तिका, धनिष्ठा, श्रवण, मृगशिरा, स्वाती, मघा, तीनै उत्तरा, पूर्वाषाढ़ा, भरणी, चित्रा, अनि पुष्य यी नक्षत्र र स्थिर लग्न धान काट्नमा शुभ हुन्छ। परन्तु शनिवार, मङ्गलवार, अनि रिक्ता तिथि ( ४-९-१४ ) वर्जित गर्नु। अरू स्थिर लग्न शुभ हुन्छ ॥१४८॥

* धान्यस्थितिमुहूर्तः *

पुनर्भे मृगशीर्षेऽन्त्ये ऽनुराधाश्रवणत्रये ।
हस्तत्रयेऽश्विनीपुष्ये रोहिण्यामुत्तरात्रये ॥
गुरौ शुक्रे रवीन्द्वोः सत्कोष्ठादौ धान्यरक्षणम् ॥१४९॥

पुनर्वसु, मृगशिरा, रेवती, अनुराधा, श्रवण, धनिष्ठा, शतभिषा, हस्त, चित्रा, स्वाती, अश्विनी, पुष्य, रोहिणी, तीनै उत्तरा यी नक्षत्रमा र गुरु, शुक्र, रविवार, सोमवार यी दिनमा कोष्ठ ( धनसार ढुकुटी ) मा धान राख्नु शुभ हुन्छ ॥१४९॥

* हवनचक्रम् *

सूर्यभात्त्रित्रिभे चान्द्रे सूर्यविच्छुक्रपुङ्गवः ।
चन्द्रारेज्यागुशिखिनो नेष्टा होमाहुतिः खले ॥१५०॥

सूर्यका नक्षत्रदेखि दिनका नक्षत्रसम्म गन्नु र होम चक्रको विचार गर्नू। ३।३ नक्षत्र सूर्यादि ग्रहका स्थापना गरेर उसको फल चक्रन्यास बाट संझनु। शुभग्रहको शुभ र क्रूर ग्रहको अशुभ फल हुन्छ ॥ १५० ॥

* हवनचक्रन्यासः *

| सू० | बु० | शु० | श० | च० | मं० | बृ० | रा० | के | ग्रह |
|---|---|---|---|---|---|---|---|---|---|
| ३ | ३ | ३ | ३ | ३ | ३ | ३ | ३ | ३ | नक्षत्र |
| अ० | शु० | शु० | अ० | शु० | अ० | शु० | अ० | अ० | फल |

* अग्निवासज्ञानम् *

सैका तिथिर्वारयुता कृताप्ता
शेषे गुणेऽभ्रे भुवि वह्निवासः ।
सौख्याय होमे शशियुग्मशेषे
प्राणार्थनाशौ दिविभूतले च ॥१५१॥

शुक्लपक्षका प्रतिपदादेखि गनेर जो तिथि हुन्छ, त्यसमा वारको संख्या ( रविवारदेखि शनिवार पर्यन्त गन्दा जति अङ्क हुन्छ ) जोड़ी दिनू। त्यसैमा अरू १ जोड़ी दिनू र ४ को भाग दिंदा जो शेष रहन्छ उसको अग्निवास जान्नू। ३।० बच्यो भने अग्निको वास पृथ्वीमा जान्नू, उसमा हवन गरे सुख प्राप्ति हुन्छ। १ बच्यो भने अग्निको वास आकाशमा जान्नू। उसको फल प्राण नाशक हुन्छ। २ बच्यो भने अग्निको वास पातालमा जान्नू उसको फल अर्थनाशक हुन्छ।

जस्तै—२०२७ माघ शुक्ल पूर्णिमायां बुधवासरे शुक्ल-प्रतिपदादेखि पूर्णिमासम्म गन्दा १५ भयो उसमा १ जोड़दा १६ भयो, बुधवारको संख्या ४ जोड़दा २० भयो यसमा ४ को भाग दिंदा शेष ० रह्यो अग्निको वास पृथ्वीमा भयो। यस दिनमा होमगर्दा सुख प्राप्ति हुन्छ।

कृष्णपक्षको उदाहरण—संवत् २०२७ चैत्रकृष्ण १४ गुरौ इष्टम्—यस दिन अग्निको वास विचार गर्नु छ, शुक्ल प्रतिपदाबाट कृष्ण १४ सम्म गन्दा २९ भयो अरू १ जोडदा ३० भयो गुरुवारको संख्या ५ जोडदा ३५ भयो ४ को भाग दिंदा ३ बच्यो। यस दिन पनि अग्निको वास पृथ्वी मानै जान्नु ॥ १५१ ॥

* नवान्नमुहूर्तः *

नवान्नं स्याच्चरक्षिप्रमृदुभे सत्तनौ शुभम् ।
विना नन्दाविषघटीमधुपौषार्किभूमिजान् ॥१५२॥

चरसंज्ञक, क्षिप्रसंज्ञक र मृदुसंज्ञक यी नक्षत्रमा फेरि शुभग्रहका लग्नमा नवान्नकर्म शुभ हुन्छ, परन्तु नन्दातिथि १।६।११ तथा विष-घटी, चैत्र र पौषमास अनि शनैश्चर, मङ्गलवार वर्जित गर्नु ॥ १५२ ॥

* घटीदोषमाह *

खरामतोऽन्त्यादितिवह्निपित्र्यभे
खवेदतः के रदतश्च सार्पभे
खबाणतोऽश्वे धृतितोऽर्यमाम्बुपे
कृतेर्भगत्वाष्ट्रभविश्वजीवभे ॥१५३॥

मनोद्विदैवानिलसौम्यशाक्रभे
कुपक्षतः शैवकरेष्टितोऽजभे ।
युगाश्वितो बुध्न्यभतोययाम्यभे
खचन्द्रतो मित्रभवासवश्रुतौ ॥१५४॥

मूलेऽङ्गबाणाद्विषनाडिकाः कृता
वर्ज्याःशुभेऽथो विषनाडिका ध्रुवाः ॥
निघ्ना भभोगेन खतर्कभाजिताः
स्फुटा भवेयुर्विषनाडिकास्तथा ॥१५५॥

विषघटीज्ञान

रेवती, पुनर्वसु, कृत्तिका, मघा, यी नक्षत्रमा ३० घटीका उपरान्तको ४ घड़ी, रोहिणीमा ४० घटीका पछि ४ घड़ी आश्लेषामा ३२ घडीका पछिको ४ घड़ी, अश्विनीमा ५० घटीका पछिको ४ घड़ी, उत्तराफाल्गुनी र शतभिषामा १८ घटिका पछिको ४ घड़ी, पूर्वाफाल्गुनी र चित्रा, उत्तरापाढ़ा पुष्य यी नक्षत्रमा २० घटीका ऊपरको चार घटी, विशाखा, स्वाती, मृगशिरा, ज्येष्ठा यी नक्षत्रमा

१४ घटीका पछिको ४ घटी, आर्द्रा र हस्त यी दुइमा २१ घटीका पछिको ४ घड़ी, पूर्वाभाद्रपदमा १५ घटीका पछिको ४ घड़ी उत्तराभाद्रपद, पूर्वाषाढ़ा भरणी यी नक्षत्रमा २४ घटीका उप्रान्तको ४ घड़ी, अनुराधा, धनिष्ठा, श्रवण यी नक्षत्रमा २० घटीका पछिको ४ घड़ी, मूल नक्षत्रमा ५६ घटीका पछिको ४ घटी विषघटी कहिन्छ यी विषघटिकामा विवाहादि शुभकार्य गर्नु हुँदैन। तर यसमा विशेष यो छ कि पूर्वोक्त नक्षत्रको मान ( घटी ) पूरा ६० छ भने पूर्वोक्त नक्षत्रका उक्त घटीका उप्रान्त चार घटी विषघटो संज्ञक हुन्छ। यदि पूर्वोक्त नक्षत्रको मान ६० घटीभन्दा कम्ति भयो भने वा अधिक ( बेर ) भयो भने ता उस नक्षत्रका प्रस्तुतमानलाई पैल्हे कहेका त्यस नक्षत्रका अङ्कले गुणा गर्नू र ६० को भागदिनू जो लब्धि आउँछ उति घटीका उप्रान्तको ४ घटी विषसंज्ञक हुन्छ ॥ १५५ ॥

* विषघटीचक्रम् *

| | | | | | | | |
|---|---|---|---|---|---|---|---|
| अ. | भ. | कृ. | रो. | मृ. | आ. | पुन. | नक्षत्र. |
| ५० | २४ | ३० | ४० | १४ | २१ | ३० | घटी. |
| पुष्य. | अश्ले. | म. | पू. फा. | उ. फा. | ह. | चि. | नक्षत्र. |
| २० | ३२ | ३० | २० | १८ | ११ | २० | घटी. |
| स्वा. | वि. | अनु. | ज्ये. | मूल. | पू. षा. | उ. षा. | नक्षत्र. |
| १४ | १४ | १० | १४ | ५६ | २४ | २० | घटी. |
| श्र. | ध. | श. | पू. भा. | उ. भा. | रे. | + | नक्षत्र. |
| १० | १० | १८ | १६ | २४ | ३० | + | घटी. |

यी नक्षत्र पूर्वलिखित घटीहरूका अनन्तर चार घड़ीसम्म विषघटी हुन्छ ॥१५३-१५५॥

* नवान्नचक्रम् *

बुधर्क्षात्पुत्रपुत्रेषु पुत्रवेदद्वयेन्दुकैः ।
सच्छुभं शुभमर्थघ्नं शुभं व्यर्थं शुभं क्रमात् ॥१५६॥
नवान्नचक्रं ज्ञातव्यं कथितं गणकोत्तमैः ॥१५७॥

बुधका नक्षत्रदेखि दिनका नक्षत्रसम्म गन्नु र प्रथम ५ नक्षत्र शुभ हुन्छ । फेरि ५ नक्षत्र शुभ, फेरि ५ शुभ, फेरि अरू ५ अर्थनाशक, फेरि ४ नक्षत्र शुभ, फेरि २ नक्षत्र अशुभ र बाँकी १ नक्षत्र शुभ हुन्छ । यो नवान्नचक्र विचार गर्नु भन्ने उत्तम पण्डितहरूले भनेका छन् ॥१५६-१५७॥

* नवान्नचक्रन्यासः *

| ५ | ५ | ५ | ५ | ४ | २ | १ | नक्षत्र |
|---|---|---|---|---|---|---|---|
| शु. | शु. | शु. | अना. | शु. | अ. | शु. | फल |

* अग्निपरिहारः *

विवाहयात्राव्रतगोचरेषु चूडोपनीते ग्रहणे युगाद्यैः ।
दुर्गाविधानेन सुतप्रसूतौ नैवाग्निचक्रं परिचिन्तनीयम् ॥

विवाहको होम, यात्राको होम तथा व्रतको होम, गोचरका ग्रहको होम फेरि मुण्डन जनै ( व्रतबन्ध ) को होम, ग्रहणको होम, युगादितिथिहरूको होम, दुर्गाजीको होम, बालकको जन्मप्रसूत ( न्वारन ) को होम अर्थात् मूलादिशान्ति इत्यादि कार्यमा अग्निचक्रको विचार गर्नु पर्दैन ॥ १५८ ॥

* युगादिमन्वादितिथिज्ञानम् *

मन्वाद्यास्त्रितिथी मधौ तिथिरवौ ऊर्जे शुचौ दिक्तिथी
ज्येष्ठेऽन्त्ये च तिथिस्त्विषेनवतपस्यश्वाः सहस्ये शिवाः ।

भाद्रेऽग्निश्च सिते त्वमाष्टनभसः कृष्णे युगाद्याः सिते ।
गोऽग्नीबाहुलराधयोर्मदनदशौ भाद्रमाघासिते ॥१५८॥

शुक्लपक्षमा मन्वादि तिथिहरू हुन्छन् ।

क्रम—चैत्रमासमा तृतीया र पूर्णिमा तिथि, कार्तिकमा पूर्णिमा र द्वादशी, आषाढ़मा दशमी र पूर्णिमा, ज्येष्ठ र फाल्गुनमा पूर्णिमा, आश्विनमा नवमी, माघमा सप्तमी, पौषमा एकादशी, भाद्रमा तृतीया तिथि, मन्वादि हुन्छन् । अरू श्रावण मासका कृष्णपक्षमा अमावस्या र अष्टमी मन्वादि हुन्छन् ॥

युगादिसंज्ञा लेखिन्छ—शुक्लपक्षमा कार्त्तिकको नवमी र वैशाखको तृतीया युगादि हुन्छन् फेरि कृष्णपक्षमा भाद्रको त्रयोदशी र माघमा अमावस्याको युगादिसंज्ञा हो, यिनमा पुण्यकाल हुन्छ ॥ १५९ ॥

※ शुक्लपक्षे मन्वादितिथिचक्रम् ※

| चैत्र | कार्ति | आषाढ़ | ज्येष्ठ | फाल्गुन | आश्विन | माघ | पौष | भाद्र | मास |
|---|---|---|---|---|---|---|---|---|---|
| ३ १५ | १५ १२ | १० १५ | १५ | १५ | ९ | ७ | ११ | ३ | तिथि |

| कृष्णपक्षे | श्रावण | मास |
|---|---|---|
| | ३०/८ | तिथि |

* शुक्लपक्षे युगादितिथिचक्रम् कृष्णपक्षे *

| भाद्र | माघ | मास | कार्तिक | वैशाख |
|---|---|---|---|---|
| १३ | ३० | तिथि | ९ | ३ |

* सर्पदंशविचारः *

यः कृत्तिका मूलमघाविशाखा-
सार्पान्तकार्द्रासु भुजङ्गदष्टः ।

स वैनतेयेन सुरक्षितोऽपि
प्राप्नोति मृत्योर्वदनं मनुष्यः ॥१६०॥

कृत्तिका, मूल, मघा, विशाखा, अश्लेषा, भरणी, आर्द्रा यी नक्षत्रमा सर्पले टोके गरुड़ले पनि रक्षा गर्न सक्तैनन्, त्यो अवश्य मर्छ ॥१६०॥

* शिल्पविद्यामुहूर्तः *

मृदुध्रुवक्षिप्रचरे ज्ञे गुरौ वा खलग्नगे ।
विधौ ज्ञजीववर्गस्थे शिल्पविद्या प्रशस्यते ॥१६१॥

मृदुसंज्ञक, ध्रुवसंज्ञक, क्षिप्रसंज्ञक, चरसंज्ञक नक्षत्रमा र लग्नमा किंवा दशौं स्थानमा बुध,बृहस्पति भएका वेला फेरि बुध, बृहस्पतिका षड्वर्गमा चन्द्रमा भएको वेला शिल्पविद्या अर्थात् काठ; ढुंगामा, चित्र इत्यादिको कारीगरी आदिको काम सिक्नु शुभदायक हुन्छ ।१६१।

* मुद्रापातनमुहूर्तः *

चित्रामृगान्त्यकरपुष्यहयानुराधा-
धात्र्युत्तरे श्रवणतस्त्रितयेऽदितौ च ।
स्वातौ विचन्द्ररविजेऽहनि पातनं स्या-
त्पूर्णासु सुष्ठु च जयासु सुमुद्रिकाणाम् ॥१६२॥

चित्रा, मृगशिरा, रेवती, हस्त, पुष्य, अश्विनी, अनुराधा, रोहिणी, तीनै उत्तरा, श्रवण, धनिष्ठा, शतभिषा, पुनर्वसु, स्वाती यी नक्षत्रमा रुपियाँ बनाउनु शुभ हुन्छ, फेरि चन्द्रवार शनिवार वर्जित गर्नु । अरू पूर्णातिथि ५।१२।१५ जयातिथि ३।८।१३ मा शुभ हुन्छ ॥ १६२ ॥

* काष्ठादिस्थापनचक्रम् *

सूर्यर्क्षाद्रसभैरधःस्थलगतैः पाको रसैः संयुतः
शीर्षे युग्ममितैः शवस्य दहनं मध्ये युगैः सर्पभीः ।

प्रागाशादिषु भेदभैः स्वसुहृदां स्यात्सङ्गमो रोगभीः
क्वाथादेः करणं सुखं च गदितं काष्ठादिसंस्थापने ।१६३।

सूर्यका नक्षत्रदेखि दिनका नक्षत्रसम्म गनेर काष्ठचक्रको स्थापन गर्नु । ६ नक्षत्र काष्ठका अधो भाग ( तल्तिर ) स्थापन गर्नु, त्यसको फल रससंयुक्त भोजन मिल्छ । २ नक्षत्रशिरमा अशुभ हुन्छ अर्थात् ती काठले मुर्दा पोल्नेछन्, मध्यमा ४ नक्षत्र सर्पभय हुन्छ । फेरि पूर्वादि चारै दिशामा ४।४ नक्षत्र स्थापन गर्नु त्यसको फल पूर्वमा मित्रसँग मिलाप हुन्छ। दक्षिणमा रोग, पश्चिममा पनि रोग हुन्छ र ती काठले औषधी पकाउनु पर्ला । उत्तरमा पऱ्यो भने सुखप्राप्ति हुन्छ ॥१६३॥

* पञ्चकरहिताद्रविनक्षत्रात्काष्ठादिस्थापनचक्रम् *

| अधः | शीर्ष | मध्य | पूर्व | दक्षिण | पश्चिम | उत्तर | स्थान |
|---|---|---|---|---|---|---|---|
| ६ | २ | ४ | ४ | ४ | ४ | ४ | नक्षत्र |
| सरसपाक. | शवदाहक. | सर्पकीभय. | मित्रसंगम | रोगभयम् | क्वाथपचनम् | सुखप्राप्ति | फल |
| शुभ | अशुभ | अशुभ | शुभ | अशुभ | अशुभ | शुभ | शुभाशुभ |

* प्रेतकर्ममुहूर्तः *

क्षिप्राहिमूलेन्द्रहरीशवायुभे
प्रेतक्रिया स्याज्झषकुम्भगे विधौ ।
प्रेतस्य दाहं यमदिग्गमं त्यजे-
च्छय्यावितानं गृहगोपनादि च ॥ १६४ ॥

क्षिप्रसंज्ञक, आश्लेषा, मूल, ज्येष्ठा, श्रवण, आर्द्रा, स्वाती यी नक्षत्रमा प्रेतकर्म शुभ हुन्छ । परन्तु कुम्भ, मीनका चन्द्रमामा प्रेतको दाह गर्नु त्याज्य छ, यथा दक्षिण दिशाको यात्रा, अरु खाट, तंबू

( पाल ) बनाउन र घर छाउनु पनि वर्जित छ। आदि शब्दले सब तृणकृत्यहरु पनि त्याज्य छ ॥१६४॥

* नारायणबलिमुहूर्तः *

शुक्रारार्किषु दर्शभूतमदने नन्दासु तीक्ष्णोग्रभे
पौष्णे वारुणभे त्रिपुष्करदिने न्यूनाधिमासेऽयने ।
याम्येऽब्दात्परतश्च पातपरिघे देवेज्यशुक्रास्तके
भद्रा वैधृतिके शवप्रतिकृतेर्दाहो न पक्षे सिते ॥१६५॥
जन्मप्रत्यरितारयोर्मृतिसुखान्त्येऽब्जे च कर्तुर्न स-
न्मध्ये मित्रभगादितिध्रुवविशाखाद्र्यर्ग्रभेज्ञेऽपि च ।
श्रेष्ठोऽर्केज्यविधोर्दिने श्रुतिकरस्वात्यश्विपुष्ये तथा
त्वाशौचात्परतो विचार्यमखिलं मध्ये यथासम्भवम् ।१६६।

शुक्र, मंगल, शनिवार र अमावस्या, चतुर्दशी, त्रयोदश, नन्दा, ६-६-११ तिथि, तीक्ष्ण संज्ञक र उग्र संज्ञक नक्षत्र रेवत, शतभिषा यी नक्षत्र फेरि त्रिपुष्करको दिन अनि फेरि क्षयमास, मलमास यी सम्पूर्ण वारादि नारायण वलि क्रियामा वर्जित छन् । अरू वर्षका उप्रान्त दक्षिणायनका सूर्य वर्जित छन् । पात र परिघ योग अनि बृहस्पति र शुक्रको अस्त, भद्रा, वैधृतियोग, शुक्लपक्ष वर्जित छ। जन्मतारा पाँचौं तारा अनि चौथो, आठौं, बाहौं चन्द्रमा यी कर्तालाई अशुभ हुन्छन् । फेरि अनुराधा, पूर्वाफाल्गुनी, पुनर्वसु, ध्रुवसंज्ञक, विशाखा, मृगशिरा, चित्रा र धनिष्ठा यी नक्षत्रमा बुधवार दाह मध्यम हुन्छ। रवि, गुरु, चन्द्रवार श्रवण, हस्त, स्वाती, अश्विनी पुष्य यी नक्षत्रमा नारायणवलि शुभ हुन्छ । फेरि वर्षका भित्र सबै विचा गर्नु उचित हुन्छ, अरू वर्ष भित्र यथासंभव विचार गर्नु पर्छ ॥ १६५-१६६ ॥

* नौकाकर्म मुहूर्तः *

शुभाहे विष्णुयुग्मेन्द्र मृगमैत्राश्विपाणिषु ।
चालनं घट्टनं स्थानान्नावः शुभतिथीन्दुषु ॥१६७॥

शुभवार तथा श्रवण, धनिष्ठा, ज्येष्ठा, मृगशिरा, अनुराधा, अश्विनी, हस्त यी नक्षत्र तथा शुभतिथि र शुभ चन्द्रमामा नाऊ चलाउनु वा बनाउनु शुभ हुन्छ ॥ १६७ ॥

* देवारामजलाशयप्रतिष्ठा मुहूर्तः *

जलाशयारामसुरप्रतिष्ठा
सौम्यायने जीवशशाङ्कशुक्रे ।
दृश्ये मृदुक्षिप्रचरे ध्रुवे स्या-
त्पक्षे सितस्वर्क्षतिथिक्षणे वा ॥१६८॥
रिक्तारवर्ज्ये निवसेऽतिशस्ता
शशाङ्कपापैस्त्रिभवाङ्गसंस्थः ।
द्व्यष्टान्त्यगैः सत्खचरैर्मृगेन्द्रे
सूर्यो घटे को युवतौ च विष्णुः ॥१६९॥
शिवो नृयुग्मे द्वितनौ च देव्याः
क्षुद्राश्चरे सर्व इमे स्थिरर्क्षे ।
पुष्ये ग्रहा विघ्नपयक्षसर्प-
भूतादयोऽन्त्ये श्रवणेऽजिनश्च ॥१७०॥

उत्तरायण सूर्य भएका वेला, मृदुसंज्ञक, क्षिप्रसंज्ञक, चरसंज्ञक, ध्रुवसंज्ञक यी नक्षत्र शुभ हुन्छन् । फेरि जुन मुहूर्तका जुन देवताका स्वामी छन् त्यस मुहूर्तमा पनि शुभ जान्नु । रिक्तातिथि ४–९–१४ र मङ्गलवार वर्जित छ । फेरि चन्द्रमा वा पापग्रह तेस्रा, एकादश,

छैटा स्थानमा हउन् । फेरि शुभग्रह आठौं बाह्रौं स्थानमा वर्जित हुन्छ । सूर्यको प्रतिष्ठा सिंह लग्नमा, ब्रह्माको कुम्भ लग्नमा, विष्णुको कन्या लग्नमा, मिथुन लग्नमा महादेवको अरु द्विस्वभाव लग्न ३-५-९-१२मा देवीको प्रतिष्ठा गर्नु शुभदायक हुन्छ । अरू क्षुद्र देवताको प्रतिष्ठा चर-लग्न १-४-७-१० मा लाभदायक हुन्छ । ( साना २ देवतालाई क्षुद्र देवता भन्दछन् ) । स्थिर लग्नमा सबै देवताको प्रतिष्ठा शुभ हुन्छ । पुष्य नक्षत्रमा ग्रहको स्थापना गर्नु । फेरि गणेश, यक्ष, सर्प, भूतादिको रेवती नक्षत्रमा स्थापना गर्नु । फेरि श्रवण नक्षत्रमा अजिन अर्थात् बुद्ध भगवान्‌को प्रतिष्ठा गर्नु शुभ हुन्छ ॥ १६८–१७० ॥

* सर्वारम्भ मुहूर्तः *

व्ययाष्टशुद्धोपचये लग्नगे शुभदृग्युते ॥
चन्द्रे त्रिषड्दशायस्थे सर्वारम्भः प्रसिद्ध्यति ॥१७१॥

लग्नदेखि आठौं, बाह्रौं शुद्ध हवस् अर्थात् उक्त स्थानमा कुनै ग्रह नहउन्, फेरि उपचय लग्न हवस् अर्थात् जन्मलग्न वा जन्म राशिदेखि तेस्रो, छैठौं दशौं एकादश यी लग्न हउन् । फेरि शुभ ग्रहको दृष्टि हवस् अथवा शुभग्रह युक्त होस् , चन्द्रमा जन्म लग्न वा जन्मराशिदेखि तेस्रो, छैठौं, दशौं, एकादश स्थानमा भएमा सर्वारम्भ शुभ हुन्छ । अर्थात् शुभाशुभ कार्य गर्नु हुन्छ ॥१७१॥

* मुहूर्तदीपिकायां पादुकासनादिमुहूर्तः *

मैत्रेऽन्त्यचन्द्रयमभादितिवाजिचित्र-
हस्तोत्तरात्रयहरीज्यविधातृभानि ॥
एतेष्वतीव शयनासनपादुकानां-
संभोगकार्यमुदितं मुनिभिः शुभाहे ॥१७२॥

अनुराधा, रेवती, मृगशिरा, भरणी, पुनर्वसु, अश्विनी, चित्रा, हस्त, तीनै उत्तरा, श्रवण, पुष्य, रोहिणी यी नक्षत्रमा र शुभ दिनमा आसन

घा खराऊ धारण गर्नु शुभ हुन्छ, यस्तो मुनिहरूले भनेका छन् ॥१७२॥

❀ रत्नमालायाममृतसिद्धियोगः ❀

हस्ते रवौ शशधरे च मृगोत्तमर्क्ष-
भौमेऽश्विनी बुधदिने च तथाऽनुराधा ॥
तिष्यो गुरौ भृगुसुतेऽपि च पौष्णधिष्णं
रोहिण्यथार्कतनयेऽमृतसिद्धियोगाः ॥१७३ ॥

रविवार हस्तनक्षत्र, चन्द्रवार मृगशिरा, मङ्गलवार अश्विनी, बुधवार अनुराधा, बृहस्पतिवार पुष्य, शुक्रवार रेवती, शनिश्चरवार रोहिणी नक्षत्र पर्‍यो भने अमृतसिद्धि नाम गरेको योग हुन्छ ॥१७३॥

❀ रत्नपरीक्षा मुहूर्तः ❀

पुनर्भे शतहस्तर्क्षे श्रवे ज्येष्ठे परीक्षणम् ।
रत्नानामष्टमीभूतं हित्वा भौमं शनैश्चरम् ॥ १७४ ॥

पुनर्वसु, शतभिषा, हस्त, श्रवण, ज्येष्ठा यी नक्षत्रमा रत्नको परीक्षा गर्नु शुभ हुन्छ । अष्टमी, चतुर्दशी तिथि, मङ्गल शनिश्चरवार वर्जित गर्नु ॥ १७४ ॥

❀ कलशचक्रम् ❀

सूर्यभात्पंचरामाद्रिवसुपंच शुभाशुभम् ।
फलं क्रमाद्बुधैर्ज्ञेयं चक्रे कलशसंज्ञके ॥ १७५ ॥

सूर्यका नक्षत्रदेखि दिनका नक्षत्रसम्म गनेर कलशचक्रको स्थापना गर्नु प्रथम पाँच नक्षत्र शुभ, फेरि तीन अशुभ फेरि सात शुभ, फेरि आठ अशुभ अरु बाँकी पाँच नक्षत्र शुभ यै क्रमले जान्नु ॥ १७५ ॥

❀ कलशचक्रन्यासः ❀

| ५ | ३ | ७ | ८ | ५ | नक्षत्र |
|---|---|---|---|---|---|
| शु० | अ० | शु० | अ० | शु० | फल |

* शस्त्रघट्टन मुहूर्तः *

कृत्तिकासु विशाखायां भौमार्कशनिवासरे ।
संल्लग्ने घट्टितं शस्त्रं नृपाणां जयदायकम् ॥ १७६ ॥

कृत्तिका र विशाखा नक्षत्रमा तथा भौम, रवि, शनिवारमा अरू शुभग्रहका लग्नमा हतियार बनाएमा राजाहरुलाई हतियार जय-दायक हुन्छ ॥ १७६ ॥

* शस्त्रधारण मुहूर्तः *

पुनर्वसुद्वये हस्ते चित्रायां रोहिणीद्वये ।
विशाखादित्रये कुर्यात् त्र्युत्तरे रेवतीद्वये ॥ १७७ ॥
रक्तां विना तिथौ सूर्यशुक्रजीवदिने तथा ।
सन्नाहच्छुरिकाखड्गकुन्तशस्त्रादिधारणम् ॥ १७८ ॥

पुनर्वसु, पुष्य, हस्त, चित्रा, रोहिणी, मृगशिरा, विशाखा, अनुराधा, ज्येष्ठा, तीनै उत्तरा, रेवती र अश्विनी यी नक्षत्रमा फेरि रिक्ता तिथि छोड़ेर रविवार, शुक्रवार, गुरुवारमा कटारी छुरी, तरवार, भाला इत्यादि शस्त्रधारण गर्नु शुभ हुन्छ ॥१७७–१७८॥

* अग्निशस्त्रघट्टनं धारणं च *

विशाखाकृत्तिकापूर्वा मघाश्लेषाश्विनीमृगे ।
मूलार्द्राभरणीज्येष्ठा सजीवे क्रूरवासरे ॥
घट्टनं धारणं प्रोक्तं वह्निशस्त्रस्य शोभनम् ॥ १७९ ॥

विशाखा, कृत्तिका, ३ पूर्वा, मघा, आश्लेषा, अश्विनी, मृगशिरा, मूल, आर्द्रा, भरणी ज्येष्ठा, यी नक्षत्र र बृहस्पति, रवि, मङ्गल, शनैश्चर यी वारमा अग्निशस्त्र बनाउनु र धारण गर्नु शुभ हुन्छ ।

* मृगयामुहूर्तः *

आश्लेषाभरणीज्येष्ठापूर्वार्द्रास्वातिमूलकैः ।
विशाखायां च पापेऽह्नि यायादाखेटकं नृपः ॥ १८० ॥

अश्लेषा, भरणी, ज्येष्ठा, तीनै पूर्वा, आर्द्रा, स्वाती, मूल, विशाखा यी नक्षत्र र पाप वारमा अर्थात् रवि, भौम, शनि यी वारमा राजाले शिकार खेल्नु लाभदायक हुन्छ ॥१८०॥

❀ द्रव्यनिधीनां गुप्तस्थाने स्थापनम् ❀

धनिष्ठोफाविशाखाख्ये पूर्वाषाढाभिधेऽन्त्यभे ।
रोहिण्यां च निधेर्भूमौ स्थापनं शुभमीरितम् ॥ १८१ ॥

धनिष्ठा, उत्तराफाल्गुनी, विशाखा, पूर्वाषाढ़ा, रेवती, रोहिणी यी नक्षत्रमा द्रव्य भूमिमा स्थापित गर्नु शुभ हुन्छ ॥१८१॥

❀ वाणिज्यमुहूर्तः ❀

अनुराधोत्तरापुष्ये रेवतीरोहिणी मृगे ।
हस्तचित्राश्विभे कुर्याद्‌वाणिज्यं दिवसे शुभे ॥१८२॥

अनुराधा, तीनै उत्तरा, पुष्य, रेवती, रोहिणी, मृगशिरा, हस्त, चित्रा, अश्विनी यी नक्षत्र र शुभवारमा वाणिज्य कर्म गर्नु शुभ हुन्छ ।

❀ धर्मक्रियामुहूर्तः ❀

धर्मक्रियामित्रमृगान्त्यचित्रा-
श्रुतित्रयस्वात्यदितौ कराश्वे ।
पुष्ये च सौम्येषु दिनेषु शस्ते
त्याहुर्मुहूर्तागमकोविदेन्द्राः ॥ १८३ ॥

अनुराधा, मृगशिरा, रेवती, चित्रा, श्रवण, धनिष्ठा, शतभिषा, स्वाती पुनर्वसु, हस्त, अश्विनी, पुष्य यी नक्षत्र र शुभवारमा धर्म-कर्म शुभ हुन्छ, यो मुहूर्त विशारदहरूले निश्चय गरेका छन् ॥१८३॥

❀ सन्धिमुहूर्तः ❀

अनुराधामघापुष्ये तिथ्यर्द्धे तैतिलाभिधे ।
लग्ने सद्दृष्टिगेऽष्टम्यां द्वादश्यां सन्धिरिष्यते ॥१८४॥

अनुराधा, मघा, पुष्य, नक्षत्र र तैतिलकरणमा मिलाप गर्नु शुभ हुन्छ। अष्टमी, द्वादशी तिथि शुभ हुन्छ, लग्नमा शुभग्रहको दृष्टि हुनु चाहिन्छ ॥१८४॥

* कथाप्रारम्भचक्रम् *

वेदाब्धिवेदश्रुतिवेदवेद-
फलं गुरोर्भाद्गणमेव गण्यम् ॥
अर्थश्च लाभश्च तथा च सिद्धि-
र्लाभो मृतोराजभयं च मोक्षः ॥१८५॥
कथारम्भं प्रकुर्वीत प्रोक्तं पूर्वैर्महर्षिभिः ॥१८६॥

बृहस्पतिका नक्षत्रदेखि दिनका नक्षत्रसम्म गन्नु र कथारम्भ चक्रको विचार गर्नु। पैल्हे ४ नक्षत्र अर्थ, फेरि ४ लाभ, फेरि ४ सिद्धि अनि ४ लाभ। फेरि ४ मृत्यु दिने जान्नू। फेरि ४ नक्षत्र राजभय हुने जान्नू। बाँकी ३ नक्षत्र मोक्ष दिने जान्नू। यो कथारम्भ चक्र पूर्वाचार्यहरूले कहेको छ ॥ १८५–१८६ ॥

* कथारम्भचक्रन्यासः *

| ४ | ४ | ४ | ४ | ४ | ४ | ३ | नक्षत्र |
|---|---|---|---|---|---|---|---|
| अर्थ | लाभ | सिद्धि | लाभ | मृत्यु | राजभय | मोक्ष | फल |

* दुन्दुभिमृदङ्गादिकरवाद्यम् *

हस्तत्रयेऽनुराधाऽन्त्ये पुनर्वसुयुगेऽश्विभे।
श्रवत्रयमृगेऽर्केऽह्नि शुभे पूर्णाजयासु च ॥१८७॥
शुभे दुन्दुभिभेर्यादिकरवाद्यं समीरितम् ॥
वंशाद्यं मुखवाद्यं तु पूर्वेष्वेव समीरितम् ॥१८८॥

हस्त, चित्रा, स्वाती, अनुराधा, रेवती, पुनर्वसु, पुष्य, अश्विनी,

श्रवण, धनिष्ठा, शतभिषा मृगशिरा यी नक्षत्र रविवार समेत शुभ दिनमा नगाड़ा ( नगारा ) वा नफीरी तथा मृदंग, वंशी मुरली इत्यादि बाजा बजाउनु शुभ हुन्छ। पूर्णा ५।१०।१५ जया ३।८।१३ यी तिथि शुभ हुन्छन् ॥ १८७–१८८ ॥

❀ शान्तिकपौष्टिककर्ममुहूर्तः ❀

पुनर्वसुद्वये स्वातीत्र्युत्तरे श्रवणत्रये ।
रेवतीद्वितये हस्तेऽनुराधारोहिणीद्वये ॥१८९॥
शान्तिकं पौष्टिकं कर्म पुण्याहे कीर्तितं बुधैः ॥१९०॥

पुनर्वसु, पुष्य, स्वाती, तीन उत्तरा, श्रवण, धनिष्ठा, शतभिषा, रेवती, अश्विनी, हस्त, अनुराधा, रोहिणी र मृगशिरा यी नक्षत्रमा शान्तिकर्म र पुष्टिकर्म गर्नु शुभ हुन्छ। पुण्यदिन संक्रान्ति आदि र युगादि मन्वादि तिथिमा यी कर्म गर्नु शुभ हुन्छ ॥ १९० ॥

❀ वीर-वेताल साधनमुहूर्तः ❀

मघार्द्राभरणीमूले मृगेऽङ्के वद्बुधे गते ॥
शुद्धाऽष्टमे भृगौ तूर्ये वीरवेतालसाधनम् ॥१९१॥

मघा, आर्द्रा, भरणी, मूल, मृगशिरा यी नक्षत्रमा वीर वेतालको साधन गर्नु शुभ हुन्छ। शुभग्रहको लग्न होस् अरू कुम्भराशिको बुध होस् आठौं स्थान शुद्ध होस् अरू चौथो शुक्र हुनु चाहिन्छ ॥ १९१ ॥

❀ मन्त्र-यन्त्र-व्रतादि मुहूर्तः ❀

उफाहस्ताश्विनीकर्णविशाखामृगभेऽहनि ॥
शुभे सूर्ययुते शस्तं मन्त्रयन्त्रव्रतादिकम् ॥१९२॥

उत्तराफाल्गुनी, हस्त, अश्विनी, श्रवण, विशाखा, मृगशिरा यी नक्षत्रमा रविवारले सहित शुभ दिनमा मन्त्र, यन्त्र र व्रतादिको साधन गर्न शुभ हुन्छ ॥ १९२ ॥

* रजोवतीस्नानमुहूर्तः *

ज्येष्ठानुराधाकररोहिणीषु स्वातीधनिष्ठासु मृगोत्तरासु ।
रजोवतीस्नानविधिं प्रकुर्याच्छुभस्थवारे च शुभे तिथौ च ॥

ज्येष्ठा, अनुराधा, रोहिणी, स्वाती, धनिष्ठा, मृगशिरा तीनै उत्तरा यी नक्षत्रमा र अरु शुक्रवार शुभतिथिमा रजस्वला स्त्रीले स्नान गर्नु शुभ हुन्छ ॥१९३॥

* गर्भधारणमुहूर्तः *

मृगानुराधाश्रुतिरोहिणीषु यस्तोत्तरास्वातिवसौ शतर्क्षे ॥
विहायषष्ठींशुभवासरेषु गर्भस्य चाधानविधिं प्रकुर्यात्।१९४।
शुभे त्रिकोणकेन्द्रस्थे पापे षष्ठे त्रिलाभगे ॥
पुत्रकामः स्त्रियं गच्छेन्नरो युग्मासु रात्रिषु ॥१९५॥

मृगशिरा, अनुराधा, श्रवण, रोहिणी, हस्त, तीनै उत्तरा, स्वाती, धनिष्ठा, शतभिषा यी नक्षत्र र शुभ तिथि गर्भधारणमा शुभ हुन्छ। षष्ठी तिथि वर्जित हुन्छ। शुभग्रह केन्द्र वा त्रिकोण एकादश स्थानमा हउन् १।४।७।१० वा ९।५ त्रिकोणमा हउन् औ पापग्रह तेस्रो, छैठौं, एघारौं हउन्, पुत्रका कामनाले पुरुषले स्त्री-प्रसंग रजोधर्मका दिनदेखि युग्म अर्थात् सम रात्रिमा गमन गर्नु ॥१९४-१९५॥

* सीमन्त-पुंसवन-कर्म मुहूर्तः *

आर्द्रात्रये भाग्ययुग्मे मृगे पूष्णि श्रुतौ करे ।
मूलत्रये गुरौ सूर्ये भौमे रिक्तां विना तिथौ ॥१९६॥
आद्ये द्वये त्रये मासे लग्ने कन्याझषे स्थिरे ॥
चापे पुंसवनं कुर्यात्सीमन्तं चाष्टमे तथा ॥१९७॥

आर्द्रा, पुनर्वसु, पुष्य, पूर्वाफाल्गुनी, उत्तराफाल्गुनी, मृगशिरा, रेवती, श्रवण, हस्त, मूल, पूर्वाषाढा यी नक्षत्र सीमन्त किंवा पुंसवन

कार्यमा शुभ हुन् । गुरु, रवि तथा मङ्गलवार शुभ हुन् । रिक्ता तिथि वर्जित गर्नु । पैल्हो, दोस्रो, तेस्रो महीना गर्भदेखि पुंसवनमा शुभ हुन्छ। कन्या, मीन तथा स्थिर लग्न २।५।८।११ शुभ हुन्छ । धन लग्न पनि शुभ हुन्छ। सीमन्त कर्म आठौं मैन्हामा शुभ हुन्छ ॥१९६-१९७॥

* द्वितीयप्रकारेण सीमन्त-पुंसवन-कर्म *

रवीज्यभौमे करमूलपुष्ये—
श्रोत्रेदितौ पुंसवनं मृगर्क्षे ॥
चरेत्षडर्काष्टतिथीन् विहाय
सीमन्तकर्माष्टमषष्ठमासे ॥१९८॥

रविवार, बृहस्पतिवार, मङ्गलवार, हस्त, मूल, पुष्य, श्रवण, पुनर्वसु, मृगशिरा, यी नक्षत्रमा पुंसवन कर्म शुभ हुन्छ । फेरि षष्ठी, द्वादशी, अष्टमी तिथि वर्जित हुन्छ। षष्ठी तिथि र आठौं महीना सीमन्तकर्म गर्नु शुभ हुन्छ। नक्षत्रादिक पुंसवनकै जान्नु ॥१९८॥

* जातकर्म-मुहूर्तः *

तज्जातकर्मादि शिशोर्विधेयं
पर्वाख्यरिक्तोनतिथौ शुभेऽह्नि ॥
एकादशे द्वादशकेऽपि घस्रे
मृदुध्रवक्षिप्रचरोडुषु स्यात् ॥१९९॥

बालकको जातकर्म पूर्वोक्त पर्व वा रिक्ता तिथिमा वर्जित हुन्छ। शुभ दिन होस् अरू जन्मदेखि एघारौं बाह्रौं दिनमा र मृदुसंज्ञक, ध्रुव-संज्ञक, क्षिप्रसंज्ञक, चरसंज्ञक नक्षत्रमा शुभदायक हुन्छ ॥१९९॥

* प्रसूतीस्नान मुहूर्तः *

हस्ताश्विनीत्र्युत्तररोहिणीषु मृगानुराधापवनान्त्यभेषु ॥
स्नायात्प्रसूता गुरुभानुभौमेत्यक्त्वाहरेर्वासरमष्टषष्ठीम् २००

हस्त, अश्विनी, तीनै उत्तरा, रोहिणी, मृगशिरा, अनुराधा, स्वाती, रेवती यी नक्षत्र प्रसूती-स्नानमा असल हुन्छन् । फेरि गुरुवार, रविवार र मङ्गलवार सहित द्वादशी, अष्टमी, षष्ठी यी तिथि वर्जित गर्नु ॥२००॥

* द्वितीयप्रकारेण प्रसूतीस्नानम् *

पौष्णध्रुवेन्दुकरवातहयेषु सूती-
स्नानं समित्रभरवीज्यकुजेषु शस्तम् ॥
नार्द्रात्रयश्रुतिमघान्तकमित्रमूल-
त्वाष्ट्रेज्ञसौरिवसुषड्रविरिक्ततिथ्याम् ॥२०१॥

रेवती, ध्रुवसंज्ञक, तीनै उत्तरा, रोहिणी, मृगशिरा, हस्त, स्वाती, अश्विनी, अनुराधा यी नक्षत्र प्रसूतीस्नानमा शुभ हुन्छन् । रवि, बृहस्पति र मङ्गलवार शुभ हुन् । आर्द्रा, पुनर्वसु, पुष्य, श्रवण, मघा, भरणी, विशाखा, कृत्तिका, मूल, चित्रा यी नक्षत्र वर्जित छन् । बुध, शनिवार र अष्टमी, षष्ठी, द्वादशी र रिक्ता यी तिथि वर्जित गर्नु ॥ २०१ ॥

* दत्तकपुत्र मुहूर्तः *

हस्तादिपञ्चकभिषग्वसुपुष्यभेषु ।
सूर्यक्षमाजगुरुभार्गववासरेषु ॥
रिक्ताविवर्जिततिथिष्वलिकुम्भलग्ने ।
सिंहे वृषे भवति दत्तसुतग्रहोऽयम् ॥२०२॥

हस्त, चित्रा, स्वाती, विशाखा, अनुराधा, अश्विनी, धनिष्ठा, पुष्य, यी नक्षत्र रवि, मंगल, बृहस्पति, शुक्रवार दत्तकपुत्र ( धर्म-पुत्र ) लिनु शुभ हुन्छ । रिक्तातिथि वा कुम्भ, वृश्चिक लग्न वर्जित छन् । सिंह, वृष लग्न असल हुन्छ ॥ २०२ ॥

* नामकरण मुहूर्तः *

चित्रानुराधामृगरेवतीषु धात्रश्विनीत्र्युत्तरहस्तपुष्ये ॥
पुनर्वसौ च श्रवणत्रिकेषु बुधार्कचन्द्रेज्यसितेषु नाम ।२०३।

चित्रा, अनुराधा, मृगशिरा, रेवती, रोहिणी, अश्विनी, तीनै उत्तरा, हस्त, पुष्य, पुनर्वसु, श्रवण, धनिष्ठा, शतभिषा, यी नक्षत्र र बुध, रवि, चन्द्र, बृहस्पति, शुक्र यी वारमा बालकको नाम राख्नु असल हुन्छ ॥ २०३ ॥

* जलपूजा मुहूर्तः *

मूलादितिद्वयं ग्राह्यं श्रवणश्च मृगः करः ॥
जलवाप्यर्चने हेयाः शुक्रमन्दार्कभूमिजाः॥२०४॥

मूल, पुनर्वसु, श्रवण, मृगशिरा, हस्त यी नक्षत्रमा प्रसूती स्त्रीले जलको पूजा गर्नु असल हुन्छ। शुक्र, शनैश्चर, रविवार र मङ्गलवार वर्जित गर्नु ॥ २०४ ॥

* बालकनिष्कासन मुहूर्तः *

मैत्रत्रये हरिद्वन्द्वे विधिद्वन्द्वेऽदितिद्वये ॥
स्वातिहस्तोत्तराषाढपूर्वार्यमहयेषु सत् ॥२०५॥
सिंहत्रये घटे लग्ने मासयोस्त्रिचतुर्थयोः ।
यात्रातिथौ च निष्काश्यः शिशुर्नैवार्किभौमयोः ॥२०६॥

अनुराधा, ज्येष्ठा, मूल, श्रवण, धनिष्ठा, रोहिणी, मृगशिरा, पुनर्वसु, पुष्य, स्वाती, हस्त, उत्तराषाढ़ा, तीनै पूर्वा, उत्तराफाल्गुनी, अश्विनी यी नक्षत्रमा बालकको निष्कासन असल हुन्छ। सिंह, कन्या, तुला, कुम्भ, यी लग्न शभ हुन् फेरि जन्मदेखि तेस्रो, चौथो महीना होस् अरू यात्राको तिथि होस् अर्थात् २।५।७।१०।११।१३ र कृष्ण-पक्षको प्रतिपदा पनि श्रेष्ठ हुन्छ, शनि र मंगल वर्जित गर्नु ॥२०५॥

* दोलारोह चक्रम् *

दोलारोहेऽर्कभात्पञ्च शर पञ्चेष सप्तभैः ॥
नैरुज्यं मरणं कार्श्य व्याधिः सौख्यं क्रमाच्छिशोः ॥२०७॥

सूर्यका नक्षत्रदेखिन् दिनका नक्षत्रसम्म झूलाचक्र ( कोक्रोआदि ) गन्नु । प्रथम पाँच नक्षत्रको फल निरोगकारक फेरि पाँच मरणप्रद यस्तै प्रकार पाँचमा कृशता, फेरि पाँचमा व्याधि अनि सात नक्षत्रमा सुखप्राप्ति हुन्छ ॥ २०७ ॥

* दोलाचक्रन्यासः *

| ५ | ५ | ५ | ५ | ७ | नक्षत्र |
|---|---|---|---|---|---|
| शुभ | अशुभ | अशुभ | अशुभ | शुभ | फल |

* स्त्रीपुरुषयोर्मध्ये कर्मभेदेन चन्द्रशुद्धिः *

विवाहे गर्भसंस्कारे चन्द्रशुद्धिः स्त्रिया अपि ॥
भूषाम्बरादिकार्येषु भर्तुश्चैवैन्दवं बलम् ॥२०८॥

विवाहकार्य, गर्भ संस्कार यी कार्यमा चन्द्रबल स्त्रीका राशिबाट लिनु पर्छ । अरू भूषण वस्त्रादि धारण गर्दामा पुरुषका राशिदेखि विचार गर्नु पर्छ ॥ २०८ ॥

* ताम्बूलभक्षण मुहूर्तः *

वारे भौमार्कहीने ध्रुवमृदुलघुभैर्विष्णुमूलादितीन्द्र-
स्वातीवस्वम्बुपेतैर्मिथुनमृगसुताकुम्भयोर्मीनलग्ने ॥
सौम्यैः केन्द्रत्रिकोणैःशुभगगनगतैःशत्रुलाभत्रिसंस्थै-
स्ताम्बूलं सार्द्धमासद्वयमितसमये प्रोक्तमन्नाशने वा ॥२०९॥

मङ्गल र शनिवारमा ताम्बूल ( पान ) खानु वर्जित हुन्छ । ध्रुव, मृदु, लघुसंज्ञक नक्षत्र र श्रवण, मूल, पुनर्वसु, ज्येष्ठा, स्वाती, धनिष्ठा, शतभिषा यी नक्षत्र शुभ हुन्छन् । फेरि मिथुन, कन्या, कुम्भ वृष, मीन यी लग्न शुभ हुन् । शुभग्रह केन्द्र १।४।७।१० वा त्रिकोण ९।५ मा हउन् औ पापग्रह दशौं, छैठौं एघारौं र तेस्रा स्थानमा भएमा

जन्मदेखि अढ़ाई महीनामा ताम्बूल भक्षण गराउनु शुभ हुन्छ, अथवा अन्नप्राशनकै दिनमा गर्नु पनि शुभ हुन्छ ॥२०९॥

* बालकभूम्युपवेशनं तथा कटिसूत्रबन्धनमुहूर्तः *

पृथ्वीं वराहमभिपूज्य कुजे विशुद्धे ।
रिक्ते तिथौ व्रजति पञ्चममासि बालम् ॥
बध्वा शुभेऽह्नि कटिसूत्रमथ ध्रुवेन्द्र-
ज्येष्ठर्क्षमैत्रलघुभैरुपवेशयेत्कौ ॥२१०॥

पृथ्वी र वराहको पूजा गरेर आफ्ना राशिदेखि गोचरोक्त मङ्गल शुद्ध, रिक्ता तिथि, जन्मदेखि पाँचौं महीना, अरू असल दिन, ध्रुवसंज्ञक, मृगशिरा, ज्येष्ठा, अनुराधा औ लघुसंज्ञक यी नक्षत्र हुन् ता कटिसूत्र अर्थात् बालकको कन्धनी बाँध्नु र भूमिमा बसाउनु असल हुन्छ ॥२१०॥

* अन्नप्राशन मुहूर्तः *

रिक्तानन्दाष्टदर्शं हरिदिवसमथो सौरिभौमार्कवारान् ।
लग्नं जन्मर्क्षलग्नाष्टमग्रहलवगं मीनमेषालिकं च ॥
हित्वा षष्ठात्समे मास्यथ हि मृगदृशां पंचमाचोजमासे ।
नक्षत्रैःस्यात्स्थिराख्यैः समृदुलघुचरैर्बालकान्नाशनंसत् ॥
केन्द्रत्रिकोण सहजेषु शुभैःखशुद्धे ।
लग्ने त्रिलाभरिपुगैश्च वदन्ति पापैः ॥
लग्नाष्टरहितं शशिनं प्रशस्तं ।
मैत्राम्बुपानिलजनुर्भमसच्च केचित् ॥२१२ ॥

रिक्ता ४।९।१४ नन्दा १।६।११ अष्टमी, अमावस्या, द्वादशी-तिथि, शनि, रवि, मङ्गलवार र जन्मलग्न, जन्म राशिदेखि आठौं लग्न वा आठौं नवमांश मीन, मेष, वृश्चिक लग्न यी सम्पूर्णमा अन्न-

प्राशन गर्नु शुभ हुन्छ । अर्थात् छैठौं महीनादेखि सम महीनामा छोराको अन्नप्राशन गर्नु, अर्थात् छैठौं आठौं दशौं इत्यादि मा गर्नु । कन्याको अन्नप्राशन पाँच महीनादेखि विषम महिनामा अर्थात् पाँचौं-सातौं-नवौं इत्यादिमा गर्नु । स्थिरसंज्ञक, मृदुसंज्ञक, लघुसंज्ञक, चरसंज्ञक यी नक्षत्र शुभ हुन् । केन्द्र १।४।७।१० वा त्रिकोण ९।५ वा तेस्रामा शुभग्रह हुन् औ दशौंमा कोहि ग्रह नहउन्, फेरि पापग्रह तेस्रामा, एकादश र छैटौंमा हुन्, औ चन्द्रमा छैठौं आठौंमा नहउन्, अनुराधा, शतभिषा, स्वाती वा जन्मका नक्षत्रमा कुनै आचार्यका मतले अशुभ हो । दोस्रा वचनले पाँचौं स्थानमा क्षीणचन्द्रमा अन्नप्राशनमा वर्जित छ, अर्थात् कृष्णपक्षका दशमीदेखि अमावस्यासम्म ॥२११-१२॥

* कर्णवेधमुहूर्तः

हित्वैतांश्चैत्रपौषावमहरिशयनं जन्ममासं च रिक्तां-  
युग्माब्दं जन्मतारामृतुमुनिवसुभिःसंमिते मास्यथो वा ।  
जन्माहात्सूर्यभूपैः परिमितदिवसे ज्ञेज्यशुक्रेन्दुवारेऽ-  
थोजाब्दे विष्णुयुग्मादितिमृदुलघुभैःकर्णवेधःप्रशस्तः २१३

संशुद्धे मृतिभवने त्रिकोणकेन्द्र-  
त्र्यायस्थैः शुभखचरैः कवीज्यलग्ने ॥  
पापाख्यैररिसहजायगेहसंस्थै-  
र्लग्नस्थेत्रिदशगुरौ शुभावहः स्यात् ॥२१४॥

चैत्रमास, पौषमास तथा अवमतिथि अर्थात् तिथिको हानि, हरिशयन अर्थात् आषाढ़शुक्ल एकादशीदेखि कार्त्तिक शुक्ल एकादशी-सम्म तथा जन्मको महीना वा रिक्तातिथि यी समस्त कर्णवेधमा वर्जित छन् । अरु युग्मवर्ष अर्थात् जन्मदेखि दोस्रो, चौथो छैटौं यसै क्रमले युग्मवर्ष पनि वर्जित हुन्छ । अरु जन्म तारा पनि वर्जित हुन्छ ।

जन्मदेखि छैठौं, सातौं, आठौं महीनामा शुभ हुन्छ। फेरि जन्मदेखि बाह्रौं र सोह्रौं दिन पनि शुभ हो। अनि बुध, बृहस्पति, शुक्र, चन्द्रवार शुभ हो। ओजवर्ष श्रेष्ठ हो, अर्थात् पैल्हो, तेस्रो, पाँचौं, श्रवण, धनिष्ठा, पुनर्वसु, मृदुसंज्ञक, लघुसंज्ञक यी नक्षत्रमा कर्णवेध शुभ हुन्छ। लग्नदेखि आठौं कोहि ग्रह न होस् त्रिकोण ९।५ केन्द्र १।४।७।१० तेस्रो र एकादशमा शुभग्रह होस् औ शुक्र, बृहस्पतिको लग्न होस् अर्थात् वृष, तुला, धन, मीन यी लग्न हुन्, पाप ग्रह छैटौं, तेस्रा, एकादश स्थानमा हुन्, अरु लग्नमा बृहस्पति भएका वेला शुभ हुन्छ॥ २१३-२१४॥

* मुण्डनमुहूर्तः *

चूडावर्षात्तृतीयात्प्रभवति विषमेऽष्टार्करिक्ताद्यषष्ठी
पर्वोनाहे विचैत्रोदगयनसमये ज्ञेन्दुशुक्रेज्यकानाम्॥
वारे लग्नांशयोश्चास्वभनिधनतनौ नैधने शुद्धियुक्ते
शाकोपेतैर्विमैत्रैर्मृदुचरलघुभैरायषट् त्रिस्थपापैः।२१५॥

पञ्चमासाधिके मातुर्गर्भे चौलं शिशोर्न सत्॥
पञ्चवर्षाधिकस्येष्टं गर्भिण्यामपि मातरि॥२१६॥

तारादौष्ट्येऽब्जे त्रिकोणोच्चगे वा
क्षौरं सत्स्यात् सौम्यमित्रस्ववर्गे॥
सौम्येऽभेब्जे शोभने दुष्टतारा
शस्ता ज्ञेया क्षौरयात्रादिकृत्ये॥२१७॥
ऋतुमत्याः सूतिकायाः सूनोश्चौलादिनाचरेत्।
ज्येष्ठापत्यस्य न जेष्ठे कैश्चिन्मार्गेऽपि नेष्यते॥२१८॥

विषम (पहिलो, तेस्रो, पाँचौं) वर्षमा मुण्डन गर्नु श्रेष्ठ हुन्छ। फेरि अष्टमी, द्वादशी, रिक्ता ४-९-१४ प्रतिपदा, षष्ठी पूर्वोक्त पर्व

र चैत्रमास यी सम्पूर्ण वर्जित छन् । उत्तरायणका सूर्यमा बुध, चन्द्र, शुक्र, बृहस्पतिवारमा शुभ हुन्छ । जन्मलग्न र जन्म राशिदेखि आठौं लग्न वर्जित हुन्छ । आठौं घर शुद्ध हुनुपर्छ अर्थात् अष्टम स्थानमा कुनै ग्रह नहउन् । ज्येष्ठा नक्षत्रले युक्त अनुराधा नक्षत्रका बिना मृदुसंज्ञक, चर संज्ञक, लघुसंज्ञक नक्षत्र शुभ हुन्छन् । पापग्रह तेस्रा, छैटा, एकादश स्थानमा शुभ हुन्छ । बालककी आमाको ५ महीनाभन्दा बढ्ताको गर्भ भए मुण्डन गर्नु वर्जित छ। बालकको ५ वर्षभन्दा बढ़ी उमेर भए मुण्डन गर्नु शुभ हुन्छ । गर्भको दोष हुँदैन । तारा दुष्ट भएमा चन्द्रमा त्रिकोण ९–५ मा वा उच्च अर्थात् वृषको होस् ता ताराको दोष लाग्दैन । अथवा चन्द्रमा शुभ ग्रह वा मित्रका षड्वर्गमा होस् ता शुभ ग्रहका राशिमा भए पनि दुष्टताराको दोष लाग्दैन, शुभ हुन्छ। अरु मुण्डनादि र यात्रा पनि शुभ हुन्छ। बालककी माता रजस्वला भएमा पनि मुण्डन अशुभ हुन्छ । फेरि पैल्हा गर्भको बालक भएमा ज्येष्ठमासमा मुण्डन गर्नु हुँदैन । कोही २ आचार्यका मतमा यस्तो पनि छ कि प्रथम गर्भका बालकको मार्गशीर्षमा मुण्डन वर्जित हुन्छ ॥२१५–२१८॥

* नित्यक्षौरमुहूर्तः *

**क्षौरे प्राणहरास्त्याज्या मघा मैत्रं च रोहिणी**
**उत्तरा कृत्तिका वारा भानुभौमशनैश्चराः ॥२१९॥**
**रिक्ता हेयाष्टमी षष्ठी क्षौरे चन्द्रक्षयो निशा ।**
**सन्ध्याविष्टयन्तगण्डान्ताभोजनान्तश्चगोगृहम् ॥२२०॥**

मघा, अनुराधा, रोहिणी, तीनै उत्तरा, कृत्तिका यी र रवि, मङ्गल, शनिवार यी नित्य क्षौर अर्थात् हजामत बनाउनमा वर्जित छन् । रिक्ता तिथि ४।९।१४ अष्टमी, षष्ठी, अमावस्या रात्रि सन्ध्या, भद्रा र गण्डान्त अनि फेरि भोजनका पछि र गोशालामा वर्जित हुन्छ ॥२१९–२२०॥

* अक्षरारम्भमुहूर्तः *

गणेशविष्णुवाग्रमाः प्रपूज्य पञ्चमाब्दके
तिथौ शिवार्कदिक्द्विषट् शरत्रिके रवावुदक् ।
लघुश्रवोनिलान्त्यभादितीशतर्क्षमित्रभे
चरोनसत्तनौ शिशोर्लिपिग्रहः सतां दिने ॥२२१॥

गणेश, विष्णु, सरस्वती, लक्ष्मीको पूजन गरेर पञ्चम वर्षमा अक्षरारम्भ गर्नु शुभ हुन्छ। एकादशी, द्वादशी, दशमी, द्वितीया षष्ठी, पञ्चमी, तृतीया यी तिथि शुभ हुन्छन्। उत्तरायणका सूर्यमा, लघुसंज्ञक नक्षत्र वा श्रवण, स्वाती, रेवती, पुनर्वसु, चित्रा, अनुराधा यी नक्षत्रमा शुभ हुन्छ। फेरि चर संज्ञक लग्न १।४।७।१० वर्जित गर्नु। यस्ता शुभ दिनमा बालकलाई लेखन प्रारम्भ गराउनु ॥२२१॥

* विद्यारम्भमुहूर्तः *

मृगात्कराच्छ्रुतित्रयेऽश्विमूलपूर्विकात्रये-
गुरुद्वयेऽर्कजीववित्सितेऽह्नि षड्शरत्रिके ।
शिवार्कदिग्द्विके तिथौ ध्रुवान्त्यमित्रभे परैः
शुभैरधीतिरुत्तमा त्रिकोणकेन्द्रगैः स्मृता ॥२२२॥

मृगशिरा, आर्द्रा, पुनर्वसु, हस्त, चित्रा, स्वाती, श्रवण, धनिष्ठा, शतभिषा अश्विनी, मूल तीनै पूर्वा, पुष्य र अश्लेषा यी नक्षत्रमा विद्यारम्भ गर्नु शुभ हुन्छ। रवि, बुध, गुरु, शुक्र यी वार तथा षष्ठी, पञ्चमी, तृतीया, एकादशी, द्वादशी, दशमी, द्वितीया यी तिथिमा शुभ हुन्छ। अरू आचार्यका मतले ध्रुवसंज्ञक नक्षत्र तथा रेवती वा अनुराधा यी असल हुन्, फेरि अरू शुभग्रह त्रिकोण ९।५ वा केन्द्र १।४।७।१० मा हुनु चाहिन्छ ॥ २२२ ॥

* गणितारम्भ मुहूर्तः *

शतद्वयेऽनुराधार्द्रे रोहिणीरेवतीकरे ।
पुष्ये जीवे बुधे कुर्यात्प्रारम्भं गणितादिषु ॥२२३॥

शतभिषा, पूर्वाभाद्रपद, अनुराधा, आर्द्रा, रोहिणी, रेवती, हस्त, पुष्य यो नक्षत्रमा र गुरु, बुधवारमा गणितारम्भ गर्नु असल हुन्छ ॥२२३॥

* व्याकरणारम्भ मुहूर्तः *

रोहिणी पञ्चके हस्तात्पुनर्भे मृगभेऽश्विभे ।
पुष्ये शुक्रेज्यविद्वारे शब्दशास्त्रं पठेत् सुधीः ॥२२४॥

रोहिणी, हस्त, चित्रा, स्वाती, विशाखा, अनुराधा, पुनर्वसु, मृगशिरा, अश्विनी, पुष्य यो नक्षत्रमा र फेरि शुक्र, बृहस्पति, बुधवारमा व्याकरण शास्त्र पढ्न थाल्नु असल हुन्छ ॥ २२४ ॥

* न्यायादि शास्त्रारम्भ मुहूर्तः *

त्र्युत्तरे रोहिणीपुष्ये पुनर्भे श्रवणे करे ।
अश्विन्यां शतभे स्वातौ न्यायशास्त्रादिकं पठेत् ॥२२५॥

तीनै उत्तरा, रोहिणी, पुष्य, पुनर्वसु, श्रवण, हस्त, अश्विनी, शतभिषा र स्वाती यी नक्षत्रमा न्यायशास्त्र आदि पढ्न आरम्भ गर्नु लाभदायक हुन्छ ॥ २२५ ॥

* धर्मशास्त्रपुराणारम्भ मुहूर्तः *

हस्तादि पञ्चके पुष्ये रेवतीद्वितये मृगे ।
श्रवत्रये शुभारम्भो धर्मशास्त्रपुराणयोः ॥ २२६ ॥

हस्त, चित्रा, स्वाती, विशाखा, अनुराधा, पुष्य, रेवती, अश्विनी, मृगशिरा, श्रवण, धनिष्ठा र शतभिषा यी नक्षत्रमा धर्मशास्त्रारम्भ तथा पुराणारम्भ असल हुन्छ ॥ २२६ ॥

* वैद्यविद्या तथा गारुडीविद्यारम्भ मुहूर्तः *

हस्तत्रयेऽनुराधायां पुनर्भे श्रवणत्रये ।

मूले चान्त्येऽश्विनीपुष्ये ज्येष्ठाश्लेषार्द्रभे मृगे ॥२२७॥
वैद्यविद्या कुजेऽब्जेऽर्के ज्येष्ठाहीनेऽत्र गारुडी ॥२२८॥

हस्त, चित्रा, स्वाती, अनुराधा, पुनर्वसु, श्रवण, धनिष्ठा, शतभिषा, मूल, रेवती, अश्विनी, पुष्य, ज्येष्ठा, अश्लेषा, आर्द्रा र मृगशिरा यी नक्षत्रमा वैद्यविद्या शुभ हुन्छ। मंगल, सोमवार तथा रविवार यी दिन असल हुन्छन्। फेरि यिनै नक्षत्रमा ज्येष्ठालाई छोडेर सर्प-विद्या शुभ हुन्छ ॥ २२७–२२८ ॥

* जैनविद्यारम्भमुहूर्तः *

श्रवणत्रये मघापूर्वाऽनुराधारेवतीत्रये ।
पुनर्भे स्वातिभे सूर्ये शुक्रे जैनागमं पठेत् ॥२२९॥

श्रवण, धनिष्ठा, शतभिषा, मघा, तीनै पूर्वा, अनुराधा, रेवती, अश्विनी, भरणी, पुनर्वसु, स्वाती यी नक्षत्रमा रवि र शुक्रवारका दिन जैनविद्या पढ्नु शुभदायक हुन्छ ॥ २२९ ॥

* फारसीविद्यारम्भमुहूर्तः *

ज्येष्ठाश्लेषा तथा पूर्वा रेवतीभरणीद्वये ।
विशाखार्द्रोत्तराषाढाशतभे पापवासरे ॥
लग्ने स्थिरे च चन्द्रे च फारसीमारबीं पठेत् ॥२३०॥

ज्येष्ठा, अश्लेषा, तीनै पूर्वा, रेवती, भरणी, कृत्तिका, विशाखा, आर्द्रा, उत्तराषाढ़ा, शतभिषा यी नक्षत्र र शनि, मङ्गल, रविवारका दिन फारसी र अरबी विद्या पढ्नु शुभ हुन्छ ॥२३०॥

* लेखनारम्भमुहूर्तः *

शुभे तिथौ शुभे वारे रेवतीयुगले तथा ।
श्रवणे चानुराधायां तथैवार्द्रादिषु त्रिषु ॥२३१॥
हस्तादित्रितये कुर्याल्लेखनारम्भणं सुधीः ॥२३२॥

शुभतिथि, वार र रेवती अश्विनी, श्रवण, अनुराधा, आर्द्रा, पुनर्वसु, पुष्य, हस्त चित्रा र स्वाती यी नक्षत्रमा लेखन आरंभ असल हुन्छ २३१-३२

* वालकजन्मसमये अभुक्तमूलादिज्ञानम् *

ज्येष्ठान्ते घटिकायुग्मं मूलादौ घटिकाद्वयम् ।
अभुक्तमूलमेतत्स्यादित्येवं नारदोऽब्रवीत् ॥२३३॥
वशिष्ठस्तु तयोरन्त्याद्ययोरेकद्विनाडिकम् ।
अङ्गिराघटिकामेकामन्ये षट् चाष्ट तत्र तु ॥२३४॥
जातं शिशुं त्यजेत्तातो न पश्येद्वाष्टहायनम् ॥२३५॥

ज्येष्ठा नक्षत्रका अन्तको २ घड़ी र मूलका आदि ( आद्य ) को घड़ी अभुक्तसंज्ञक मूल हुन्छ। यो नारदजीको वचन हो। अरू वशिष्ठजी भन्छन् कि ज्येष्ठका अन्तमा एक घड़ी र मूलका आदिमा दुइ घड़ी अभुक्तसंज्ञक मूल हुन्छ। अङ्गिरा ऋषि भन्छन् कि ज्येष्ठान्तको १ घड़ी र मूलादिको एक घड़ी अभुक्तसंज्ञक मूल हो। अरू-अरू आचार्यहरूको यो मत छ कि ज्येष्ठाका ६ घड़ी मूलका आदिको ८ घड़ी अभुक्त-संज्ञक हो। यस्ता योगमा वालक उत्पन्न भयो भने बाबूले त्यसलाई त्यागीदिनू अथवा आठ वर्षसम्म त्यसको मुख नहेर्नु; त्यसपछि हेर्दामा दोष लाग्दैन हेर्न हुन्छ ॥२३३-२३५॥

* मूलजनने पादफलम् *

मूलादिचरणे तातो द्वितीये जननी तथा ।
तृतीये तु धनं नश्येच्चतुर्थे हि शुभावहम् ॥२३६॥

मूलको पहिला चरणमा जन्म भए पिताको नाश गर्छ, दोस्रा चरणमा माताको र तेस्रा चरणमा धनको नाश गर्छ; चौथा चरणमा असल हुन्छ॥

* द्वितीयप्रकारेण पादफलम् *

आद्ये पिता नाशमुपैति मूले। पादे द्वितीये जननी तृतीये ॥

धनं चतुर्थोऽस्य शुभोऽथ शान्त्या-
सर्वत्र सत्स्यादहिभे विलोमम् ॥२३७॥

मतान्तरमा यस्तो भनेको छ कि पहिला चरणमा पिताको र दोस्रा चरणमा माताको नाश गर्छ; तेस्रा चरणमा धनको नाश गर्दछ र चौथो चरण असल हुन्छ । शान्ति गरे सबै असल हुन्छन् । यस्तै अश्लेषाको विलोम फल हुन्छ अर्थात् पहिला चरण शुभ, दोस्रा चरण धन नाश; तेस्रा चरण माताको नाश र चौथा चरणमा पिताको नाश गर्दछ ॥ २३७ ॥

* ज्येष्ठायाश्चरणफलम् *

आद्ये पादेऽग्रजं हन्ति ज्येष्ठायामनुजं द्विके ।
तृतीये जननीं जातः स्वात्मानं च तुरीयके ॥२३८॥

ज्येष्ठा नक्षत्रका पहिला चरणमा दाज्यूको नाश गर्छ, दोस्रा चरणमा भाईको नाश गर्छ; तेस्रा चरणमा माता (आमा) लाई पिर्दछ, ज्येष्ठाका चौथा चरणमा जन्म भए बालक आफैं नाश हुन्छ अर्थात् मर्दछ ॥२३८॥

* मूलवासज्ञानम् *

माघाषाढ़ाश्विने भाद्रपदे मूलं वसेद्दिवि ।
कार्त्तिके श्रावणे चैत्रे पौषमासे तु भूतले ॥२३९॥
वैशाखे फाल्गुने ज्येष्ठे मार्गे पातालवर्ति तत् ।
भूतले वर्तमाने तु ज्ञेयो दोषोऽन्यथा न हि ॥२४०॥

माघ, आषाढ़, आश्विन र भाद्रपद यी महीनामा मूलको वास आकाशमा जान्नू । कार्तिक, श्रावण, चैत र पौषमा मूलको वास पृथ्वीमा जान्नू । वैशाख, फाल्गुन, ज्येष्ठ, मार्गशीर्षमा मूलको वास पातालमा जान्नू । जब पृथ्वीमा मूलको वास हुन्छ तब त्यो मूल दोषी हुन्छ अन्यथा दोष लाग्दैन ॥ २३९-२४० ॥

* मूलवासचक्रम् *

| आकाश | पृथ्वी | पाताल | मूलवास |
|---|---|---|---|
| माघ, आषाढ़ आश्विन, भाद्र | कार्तिक, चैत्र श्रावण, पौष | फाल्गुन, ज्येष्ठ मार्गशीर्ष, वैशाख | मास |

* स्तन्यपानमुहूर्तः *

जातकर्मोक्तनक्षत्रे श्रवणे च पुनर्वसौ ।
त्यक्त्वा स्वातीं स्तन्यपानं शुभं प्रोक्तं शुभेऽहनि ॥२४१॥

जातकर्ममा जो नक्षत्र कहिएको छ तथा श्रवण, पुनर्वसु नक्षत्रमा बालककी माताको प्रथम दुग्ध पान गराउनु शुभ हुन्छ, स्वाती नक्षत्रले रहित भएको राम्रो दिन असल हुन्छ॥ २४१ ॥

* सूतिकाक्वाथमुहूर्तः *

भैषज्यगदिते धिष्ण्ये वारे दुर्योगवर्जिते ।
आरोग्यहेतवे क्वाथः सूतिकायाश्च तच्छिशोः ॥२४२॥

जो नक्षत्र र वारमा औषधि खान कहेको छ उसमा सुत्केरी स्त्रीलाई काढ़ा (औषधि दिनु असल हुन्छ। दुर्योगादि वर्जित गरी यसै मुहूर्तमा बालकलाई पनि आरोग्यका निम्ति काढ़ा इत्यादि दिनु असल हुन्छ ॥

* सूतिकापथ्यमुहूर्तः *

अन्नाशनोक्तनक्षत्रे शुभाहे सांशुमालिनि ।
हित्वा रिक्ता च दुर्योगं सूतिकापथ्यमीरितम् ॥२४३॥

जो नक्षत्र अन्नप्राशनमा कहेका छन् उनैमा सूतिका स्त्रीलाई पथ्य ( अन्नादि ) दिनु लाभदायक हुन्छ, फेरि रविवारले समेतका असल दिन पनि हुनु पर्दछ। दुष्ट योग वा रिक्ता तिथि वर्जित छ ॥ २४३ ॥

* यवनागमे लिङ्गाण्डच्छेदनमुहूर्तः *

नराश्ववृषभादिनां लिङ्गाण्डच्छेदनं मतम् ।
अर्कारेज्यान्त्यपुष्यार्कस्वातीन्दुश्रुतिवासवैः ॥२४४॥

मनुष्य वा वृषादिको लिङ्गाण्डच्छेदन ( खसीपार्ने ) मुहूर्त यवन-शास्त्रका मतले विचार गर्नु, रवि, मङ्गल, गुरुवार तथा रेवती, पुष्य, हस्त, स्वाती, मृगशिरा, श्रवण र धनिष्ठा यी नक्षत्र मा असल हुन्छ ॥

* शुभाशुभतारीखज्ञानम् *

तृतीया तथैवाष्टमी विश्वसंख्या
तथाष्टादशी च त्रयोविंशतिश्च ।
तथैवाष्टविंशत्तरीखा निषिद्धाः
सदा यावनैः शास्त्रविद्भिः प्रदिष्टाः ॥२४५॥

फारसी मासको तेस्रो, आठौं, तेह्रौं, अठाह्रौं, तेईसौं र अट्ठाईसौं यी तारीख (गते) निषिद्ध छन् । यी यवन-शास्त्रमा प्रदिष्ट छन् ॥२४५॥

* गण्डान्तयोगेन मूलनक्षत्रज्ञानम् *

ज्येष्ठाश्लेषारेवतीनामन्ते च घटिकाद्वयम् ।
आदौ मूलमघाश्वानां भगण्डो घटिकाद्वयम् ॥२४६॥

ज्येष्ठा, अश्लेषा र रेवती यी नक्षत्रका अन्तमा दुइ घड़ी र मूल, मघा तथा अश्विनीका आदिमा दुइ घड़ी नक्षत्र गण्डान्त हुन्छ । फेरि यी ६ नक्षत्र मूलका जान्नु ॥ २४६ ॥

* तिथिगण्डान्तज्ञानम् *

नन्दिकायास्तिथेरादौ पूर्णानां च तथान्तिमे ।
घटिकैका शुभे त्याज्या तिथिगण्डोऽयमुच्यते ॥२४७॥

नन्दा तिथिका आदिमा र पूर्णातिथिका अन्तमा एक-एक घड़ीका दरले तिथि गण्डान्त हुन्छ, यो शुभ कार्यमा त्याज्य छ ॥२४७॥

* लग्नगण्डान्तज्ञानम् *

मीनवृश्चिककर्कान्ते घटिकार्धं परित्यजेत् ।
आदौ मेषस्य चापस्य सिंहस्य घटिकार्धकम् ॥२४८॥

मीन, वृश्चिक र कर्कका अन्तमा आधा घड़ी लग्न गण्डान्त हुन्छ। मेष, धन र सिंहका आदिमा आधा घड़ीसम्म लग्नगण्डान्त हुन्छ २४८

* गण्डान्तफलम् *

तिथिगण्डे भगण्डे च लग्नगण्डे च जातकः ।
न जीवति तदा जातो जीवितश्चेद्धनी भवेत् ॥२४९॥

तिथिगण्डान्त वा लग्नगण्डान्तमा बालक जन्म्यो भने बाँच्दैन; यदि बाँच्यो भने ठूलो धनी हुन्छ ॥ २४९ ॥

* अग्निहोत्रमुहूर्तः *

प्राजापत्ये पूषभे सद्विदैवे
पुष्ये जेष्ठाश्वीन्दवे कृत्तिकासु ॥
अग्न्याधानं चोत्तराणां त्रयेऽपि
श्रेष्ठं प्रोक्तं प्राक्तनैर्विप्रमुख्यैः ॥२५०॥

रोहिणी, रेवती, विशाखा, पुष्य, ज्येष्ठा, अश्विनी, मृगशिरा, कृत्तिका, तीनै उत्तरा यी नक्षत्रमा अग्निहोत्रादि यज्ञ शुभ हुन्छ। आचार्य भन्छन् कि यो यज्ञ ब्राह्मणहरूको मुख्य हो ॥ २५० ॥

* यज्ञोपवीतमुहूर्तः *

पूर्वाषाढहरित्रयेऽश्विमृगभे हस्तत्रये रेवती ।
ज्येष्ठापुष्यभगेषु चोत्तरगते भानौ च पक्षे सिते ॥
गोमीनप्रमदाधनुर्वनचरे शुक्रे गुरौ भास्करे ।
पञ्चम्यां दशमीत्रये व्रतमिह श्रेष्ठं द्वितीयाद्वये ॥२५१॥

पूर्वाषाढा, श्रवण, धनिष्ठा, शतभिषा, अश्विनी, मृगशिरा, हस्त, चित्रा, स्वाती, रेवती, ज्येष्ठा, पुष्य र पूर्वाफाल्गुनी यी नक्षत्र यज्ञोपवीत ( व्रतबन्ध ) मा शुभ हुन् तथा उत्तरायणका सूर्य हउन् फेरि शुक्लपक्ष होस् अरु वृष, मीन, कन्या, धन, सिंह यी लग्न शुभ

हुन्छ। शुक्र, बृहस्पति, रविवार शुभ हुन्छ; फेरि पञ्चमी, दशमी, एकादशी, द्वादशी, द्वितीया, तृतीया यी तिथि शुभ हुन्छन् ॥ २५१ ॥

* द्वितीयप्रकारेण यज्ञोपवीतमुहूर्तः *

क्षिप्रध्रुवाहिचरमूलमृदुत्रिपूर्वा
रौद्रेऽर्कविद्गुरुसितेन्दुदिने व्रतं सत् ।
द्वित्रीपुरुद्ररविदिक्प्रमिते तिथौ च
कृष्णादिमत्रिलवकेऽपि न चापराह्णे ॥२५२॥
कवीज्यचन्द्रलग्नपा रिपौ मृतौ व्रतेऽधमाः ।
व्ययेऽब्जभार्गवौ तथा तनौ मृतौ सुते खलाः ॥२५३॥
व्रतबन्धेऽष्टषड्रिष्फवर्जिताः शोभनाः शुभाः ।
त्रिषडाये खलाः पूर्णो गोकर्कस्थो विधुस्तनौ ॥२५४॥

क्षिप्रसंज्ञक नक्षत्र, ध्रुवसंज्ञक, आश्लेषा, चरसंज्ञक, मूल, मृदुसंज्ञक, तीनै पूर्वा, आर्द्रा यी नक्षत्र तथा रवि, बुध, गुरु, शुक्र, चन्द्र यी वार र द्वितीया, तृतीया, पञ्चमी, एकादशी, द्वादशी, दशमी यी तिथि शुभ छन्। शुक्लपक्ष र कृष्णपक्षको पञ्चमीसम्म शुभ हुन्छ। शेष कृष्णपक्ष अशुभ जान्नु, पराह्ण अर्थात् दिनको तेस्रो भागमा पनि वर्जित छ अर्थात् दोपहरदेखि पूर्वै यज्ञोपवीत गर्नु शुभ हुन्छ।

यज्ञोपवीतमा लग्नदेखि छैठौं, आठौं स्थानमा स्थित भएको शुक्र

---

१—यद्यपि सबै वर्णको यज्ञोपवीत ( व्रतबन्ध ) संस्कार क्षिप्रादि संज्ञा नक्षत्रमा कहियो। तथापि ब्राह्मणका बालकहरूको व्रतबन्ध पुनर्वसु नक्षत्रमा गर्नु ठीक हुँदैन भन्ने यस्तो शिष्टाचार ( रुढ़ी-बुढ़ी ) छ। यस निमित्त ग्रन्थान्तर बाट यो पनि ज्ञात हुन्छ कि ब्राह्मणको वसन्त ऋतुमा, क्षत्रियको ग्रीष्म ऋतुमा; वैश्यको शरद ऋतुमा व्रतबन्ध संस्कार गर्नु ठीक हुन्छ अर्थात् यसमा गर्दा अति उत्तम हुन्छ, फेरि माघदेखि लिएर ज्येष्ठ सम्म ५ महीना ब्राह्मणादिका निमित्त साधारण कहिएको छ।

बृहस्पति, चन्द्रमा, लग्नेश बाहौं स्थानमा स्थित चन्द्रमा शुक्र अनि लग्नमा किंवा आठौं पाँचौं स्थानमा पाप ग्रहहरू स्थित भए अधम अर्थात् बालकलाई अनिष्टकारक हुन्छ ।

यज्ञोपवीतमा लग्नदेखि आठौं छैठौं र बाहौं स्थान छोडेर अन्य स्थानमा शुभग्रह स्थित हउन्, तेस्रो छैठौं एघारौं स्थानमा पापग्रह स्थित भएर पूर्ण चन्द्रमा लग्नमा स्थित भए शुभ हुन्छ । तथा वृष, कर्क राशिमा स्थित भयो भने शुभ हुन्छ ॥ २५२–२५४॥

* यज्ञोपवीतलग्ने नवांशफलम् *

क्रूरो जडो भवेत्पापः पटुः षट्कर्मकृद् बटुः ।
यज्ञार्थभाक् तथा मूर्खो रव्याद्यंशे तनौ क्रमात् ॥२५५॥

यज्ञोपवीतका लग्नमा सूर्यका नवांश[1]को उदय भए बालक क्रूर अर्थात् निर्दयी हुन्छ । अरू चन्द्रमाका नवांशको उदय होस्ता जड़ अर्थात् विचारहीन हुन्छ। तथा मङ्गलका नवांशको उदय होस्ता पापी, बुधका नवांशको उदयमा पण्डित हुन्छ। फेरि बृहस्पतिका नवांशको उदयमा षट्कर्म[2] गर्ने हुन्छ । शुक्रका नवांशको उदय होस्ता यज्ञ गर्ने हुन्छ। शनिका नवांशको उदयमा मूर्ख हुन्छ । यस्कारण व्रतबन्ध मुहूर्तका लग्नमा शुभ ग्रहकै नवांशमा यज्ञोपवीत गर्नु उत्तम हुन्छ ॥२५५॥

* यज्ञोपवीते चन्द्रनवांशफलम् *

विद्यानिरतः शुभराशिलवे पापांशगते हि दरिद्रतरः ।
चन्द्रे स्वलवे बहुदुःखयुतःकर्णादितिभे धनवान् स्वलवे २५६

यज्ञोपवीत कालमा चन्द्रमा यदि शुभराशिका नवांशमा स्थित भए बालक विद्यामा निरत, पापाराशिका नवांशमा बहुतै दरिद्र आफ्ना राशिको अर्थात् कर्कका नवांशमा स्थित भए बहुत दुःख प्राप्त

१—रवि आदिका नवांशको विचार यसै प्रकरणमा गरिन्छ ।
२—यज्ञगर्नु, यज्ञगराउनु, दानलिनु, दिनु पढ़नु पढ़ाउनु यिनै कर्म हुन् ।

हुन्छ, तथा श्रवण वा पुनर्वसु नक्षत्रका चन्द्रमा भएर कर्कका नवांशमा होस्ता बालक धनवान् हुन्छ ॥२५६॥

* यज्ञोपवीतमध्ये कुयोगादिज्ञानम् *

कृष्णे प्रदोषेऽनध्याये शनौ निश्यपराह्णके ।
प्राक् सन्ध्यागर्जिते नेष्टो व्रतबन्धो गलग्रहे ॥२५७॥
त्रयोदश्यादिचत्वारि सप्तम्यादिदिनत्रये ।
चतुर्थीमेकमेतेषु अष्टावेते गलग्रहाः ॥२५८॥

पञ्चमीसम्म छोड़ेर कृष्णपक्षमा र सायंकाल प्रदोष परेको दिनमा फेरि अनध्यायमा शनिवारका दिनमा अनि रात्रिमा तथा मध्याह्नका पछाडी प्रातःकाल मेघ गर्जेका दिनमा यज्ञोपवीत गर्दा अशुभ हुन्छ तथा गलग्रहमा पनि वर्जित छ। अब गलग्रह लेखिन्छ, त्रयोदशीदेखि चार तिथि अर्थात् त्रयोदशी, चतुर्दशी, पूर्णमासी, परेवा; कृष्णपक्षमा अमावस्या र सप्तमीदेखि तीन तिथि गलग्रह संज्ञक जान्नू ॥२५७–२५८॥

* प्रदोषज्ञानम् *

अर्कतर्कत्रितिथिषु प्रदोषः स्यात्तदग्रिमैः ।
रात्र्यर्धसार्धप्रहरयाममध्यस्थितैः क्रमात् ॥२५९॥

द्वादशी तिथिमा आधारातदेखि पहिले त्रयोदशी तथा षष्ठी तिथिमा डेढ़पहर रात्रिसम्म सप्तमी, तृतीया तिथिमा एकपहर रात्रिसम्म चौथीको प्रवेश भयो भने प्रदोष जान्नू ॥२५९॥

* अनध्यायज्ञानम् *

शुचिशुक्रपौषतपसां दिगशिवरुद्रार्कसंख्यसिततिथयः ।
भूतादित्रितयाष्टमीसंक्रमणं च व्रतेष्वनध्यायाः ॥२६०॥

* अन्यकुयोगज्ञानम् *

आषाढ़शुक्ल दशमी, ज्येष्ठ शुक्लद्वितीया, पौष शुक्ल एकादशी,

माघ शुक्ल द्वादशी यी सबै यज्ञोपवीतमा अनध्याय संज्ञक हुन्, चतुर्दशीदेखि तीन तिथि अर्थात् चतुर्दशी, पौर्णमासी ( अमावस्या ), प्रतिपदा वा अष्टमी तथा सूर्यसंक्रांतिको दिन यी पनि यज्ञोपवीतमा अनध्याय संज्ञक हुन् । यिनमा यज्ञोपवीत गर्नु ठीक हुँदैन ॥२६०॥

* अन्यकुयोगज्ञानम् *

नान्दीश्राद्धोत्तरं मातुः पुष्पे लग्नान्तरे न हि
शान्त्या चौलं व्रतं पाणिग्रहः कार्योऽन्यथा न सत् ।२६१।

नान्दीश्राद्धका अनन्तर बालककी माता रजस्वला भए त्यस बालकको मुण्डन, यज्ञोपवीत, विवाह संस्कार पूर्वनिश्चित मुहूर्त छोडेर दोस्रा मुहूर्तमा गर्नुपर्छ, यदि दैवयोगले शुभ मुहूर्त शीघ्र नपाए धर्मशास्त्रोक्त शान्ति गरेर उसै मुहूर्तमा मुण्डनादि संस्कार-कर्म गर्नू विना शान्ति मुण्डनादि संस्कार गरे शुभ हुँदैन ॥२६१॥

* ग्रहयुक्तकुयोगज्ञानम् *

शुक्रे जीवे तथा चन्द्रे सूर्यभौमार्किसंयुते ।
निर्गुणः क्रूरचेष्टः स्यान्निर्घृणः सद्युते पटुः ॥२६२॥

शुक्र, बृहस्पति, चन्द्रमा, सूर्यके साथ भए बालक निर्गुणी हुन्छ, तथा शुक्र, बृहस्पति, चन्द्रमा मङ्गलका साथ भए बालक क्रूरचेष्टाको हुन्छ । शुक्र, बृहस्पति, चन्द्रमा, शनिका सँग भए बालक निर्दयी होला । फेरि सबै शुभग्रह एकै घरमा भए पण्डित होला ॥२६२॥

* व्रतबन्धे विवाहादौ च रविगुर्वादिबलम् *

गुरुसूर्यबलं ज्ञेयं विवाहे यद्विवक्ष्यते ।
चन्द्रताराबलं पूर्वमुक्तं ग्राह्यं बटोः शुभम् ॥२६३॥
बटुकन्याजन्मराशेस्त्रिकोणायद्विसप्तगः ।
श्रेष्ठो गुरुः खषट्त्र्याद्ये पूजयाऽन्यत्र निन्दितः ॥२६४॥

चतुर्थे चाष्टमे चैव द्वादशस्थे दिवाकरे ।
विवाहितो नरो मृत्युं प्राप्नोत्यत्र न संशयः ॥२६५॥
जन्मन्यथो द्वितीये वा पञ्चमे सप्तमेऽपि वा ।
नवमे च दिवानाथे पूजया पाणिपीडनम् ॥२६६॥
एकादशे तृतीये वा षष्ठे वा दशमेऽपि वा ।
वरस्य शुभदो नित्यं विवाहे दिननायकः ॥२६७॥

जस्ता प्रकारले विवाहमा बृहस्पति, सूर्यको बल विचारिन्छ उसै तरह व्रतबन्धमा पनि विचारिन्छ । फेरि पूर्वोक्त चन्द्रमा वा ताराको बल पनि लिनुपर्छ । जब राम्रो हुन्छ तब यज्ञोपवीत बालकको शुभ हुन्छ । बालक वा कन्याका जन्मराशिदेखि नवम, पञ्चम, एकादश, दोस्रो, सातौं यी स्थानमा बृहस्पति हउन् ता श्रेष्ठ हुन्छ तथा दशौं, छैटौं, तेस्रो, पहिलो होस् ता दान दिनाले शुभ हुन्छ । फेरि चौथो. आठौं, बाह्रौं अशुभ जान्नु । जन्मराशिदेखि चौथो, आठौं, बाह्रौं स्थानमा सूर्य बसे बालकको मृत्यु हुन्छ । फेरि जन्मको दोस्रो वा पांचौं, सातौं वा नवौं भए पूजा गर्दा शुभ हुन्छ । फेरि एकादश, तेस्रो, छैटौं, दशौं सूर्य भए शुभ जान्नु ॥२६३–२६७॥

* गुरुबलचक्रम् * रविबलचक्रम् *

| स्थानानि | फलम् | स्थानानि | फलम् |
|---|---|---|---|
| ११ । २ । ५ । ७ । ९ | शुभम् | ११ । ३ । ६ । १० | शुभम् |
| ६ । १ । ३ । १० | पूज्यः | १ । २ । ५ । ७ । ९ | पूज्यः |
| ४ । ८ । १२ | नेष्टः | ४ । ८ । १२ | नेष्टः |

* गुरुपरिहारः *

स्वोच्चे स्वभे स्वमैत्रे वा स्वांशे वर्गोत्तमे गुरुः ।
रिष्फाष्टतुर्यगोऽपीष्टो नीचारिस्थः शुभोऽप्यसत् ॥२६८॥

बृहस्पति कर्क, धन, मीन राशिका हुन् अथवा आफ्ना मित्रका घरमा हुन् अर्थात् मेष वृश्चिक राशिका वा धन, मीनका नवांशमा हुन्, उनै राशि तथा वर्गोत्तम अर्थात् जुन राशिका बृहस्पति छन् उसै राशिका नवांश भएमा बाहौं आठौं चौथो भए पनि शुभ जान्नु। नीच अर्थात् मकर राशिका वा शत्रुका घरमा अर्थात् मिथुन, कन्या, तुला, वृष राशिका भए ता अशुभ जान्नु ॥२६८॥

* यज्ञोपवीतलग्ने केन्द्रस्थानगतग्रहफलम् *

राष्ट्रसेवी वैश्यवृत्तिः शस्त्रवृत्तिश्च पाठकः।
प्राज्ञोऽर्थवान् म्लेच्छसेवी केन्द्रे सूर्यादिखेचरैः ॥२६९॥

लग्न, चौथो, सातौं, दशौं यी स्थानको केन्द्र संज्ञा जान्नु। यदि यज्ञोपवीत कालमा केन्द्रमा सूर्य भए बालक राष्ट्र-सेवक, चन्द्रमा भए वैश्यवृत्तिवाला (व्यापारी), मङ्गल भए हतियार उठाउने, बुध भए पाठक अर्थात् पढ़ने वा पढ़ाउने, बृहस्पति भए पण्डित, शुक्र भए अर्थवान् ( धनवान् ) र शनि केन्द्रमा भए म्लेच्छ ( मुसलमान ) को नोकरी गर्ने हुन्छ ॥२६९॥

* ग्रहाणां केन्द्रफलचक्रम् *

| सू. | च | म. | बु. | बृ. | शु. | श. | ग्रहाः |
|---|---|---|---|---|---|---|---|
| राष्ट्रसेवी | वैश्यवृत्ति | शस्त्रवृत्तिः | पाठकः | प्राज्ञः | अर्थवान् | म्लेच्छसेवी | फलम् |

* द्वितीयप्रकारेण गुरुपरिहारः *

चैत्रे मासि रवौ मीने विबलेऽपि गुरौ बटोः।
व्रतबन्धः प्रशस्यः स्याच्चैत्रे मीनयुतः शुभः ॥२७०॥

चैत महीना, मीन राशिका सूर्य हुन् ता बालकको बृहस्पति निर्बल भए पनि व्रतबन्ध शुभ जान्नु; किनभने चैतमा मीनका सूर्य रहुतै शुभ हुन्छन् ॥२७०॥

* राज्ञां क्षुरिकाबन्धनमुहूर्तः *

व्रतोक्तमासतिथ्यादौ विचत्रे सबले कुजे ।
विभौमे क्षुरिकाबन्धः प्राग्विवाहान्महीभुजाम् ॥२७१॥

यज्ञोपवीतको मास तिथ्यादि होस् परन्तु चैत्र महीनाको विना अरु मङ्गल राशिदेखि गोचरोक्त बली होस् फेरि मङ्गलवारका विना विवाहका पैल्है राजाहरुले क्षुरिकाबन्धन गर्नु शुभ हुन्छ ॥२७१॥

* विवाहमुहूर्तः *

मूलानुराधामृगरेवतीषु हस्तोत्तरास्वातिमघासुधात्र्ये ॥
ज्येष्ठे तपःफाल्गुनराधमार्गे शुचौ तु पाणिग्रहणं प्रशस्तम् २७२

मूल, अनुराधा, मृगशिरा, रेवती, हस्त, तीनै उत्तरा, स्वाती, मघा, रोहिणी यी नक्षत्र वा ज्येष्ठ, माघ, फाल्गुन, वैशाख, मार्गशीर्ष, आषाढ़ यी महीनामा विवाह शुभ हुन्छ ॥२७२॥

* वरणमुहूर्तः *

उत्तरात्रितयपूर्विकात्रये रोहिणीष्वनलभे वरणं सत् ॥
योषितो गुरुरिनः पुरुषस्येन्दुर्द्वयोः परिणये सबलः सन् २७३

तीनै उत्तरा,तीनै पूर्वा,रोहिणी, कृत्तिका यी नक्षत्रमा वर वरण गर्नु (जनैसुपारी पैसा आदि तिलक चढ़ाउनु) शुभ हुन्छ। यसमास्त्रीको गुरुबल पुरुषको सूर्यबल लिएर विवाह गर्दा शुभ हुन्छ। यज्ञोपवीतमा कहिएको सबै विचार गर्नुपर्छ। अरू चन्द्रमाको बल[1] दुवैको लिनु पर्छ ॥२७३॥

* द्वितीयप्रकारेण वरणमुहूर्तः *

धरणिदेवोऽथवा कन्यकासोदरः
शुभदिने गीतवाद्यादिभिः संयुतः ।

---

१—चन्द्रबल संवत्सर प्रकरणमा लेखिएको हुनाले फेरि यहाँ लेखिएन ।

वरवृत्तिं वस्त्रयज्ञोपवीतादिना
ध्रुवयुतैर्वह्निपूर्वात्रयैराचरेत् ॥२७४॥

तीनै उत्तरा, रोहिणी, कृत्तिका, तीनै पूर्वा यी नक्षत्रमा शुभदिन, शुभ लग्नादिमा गीत बाजा आदिले युक्त भएर ब्राह्मण किंवा कन्याका भाईहरूले वस्त्र, यज्ञोपवीत र द्रव्य आदिले वरको वरण गर्नु ॥२७४॥

* विवाहे जन्ममासादिनिषेधः *

आद्यगर्भसुतकन्ययोर्द्वयोर्जन्ममासभतिथौ करग्रहः ॥
नोचितोऽथ विबुधैः प्रशस्यतेचेद्द्वितीयजनुषोः सुतप्रदः ॥

पहिले उत्पन्न भएका पुत्र कन्या हुन् ता जन्म-मास वा जन्म-नक्षत्र वा जन्मतिथि विवाहमा वर्जित गर्नु। अरू जो दोस्रा गर्भका पुत्र, कन्या भएमा जन्ममासादिकले पुत्रप्रद हुन्छ अर्थात् जन्म मासादिमा विवाह भयो भने पुत्रप्राप्ति हुन्छ ॥ २७५ ॥

* ज्येष्ठमासनिषेधः *

ज्येष्ठद्वन्द्वं मध्यमं संप्रदिष्टं
त्रिज्येष्ठं स्यान्नैव युक्तं कदापि ॥
केचित्सूर्यं वह्निगं प्रोज्झ्यमाहु-
र्नैवाऽन्योन्यं ज्येष्ठयोः स्याद्विवाहः ॥ २७६ ॥

दुइ ज्येष्ठमा विवाह मध्यम हुन्छ अर्थात् वर-कन्याका एक आदि (पहिला) गर्भको जन्म होस् फेरि ज्येष्ठ महीना पनि होस्त दुइ ज्येष्ठ भनेर त्यही कहिन्छ, तीन ज्येष्ठमा विवाह गर्नु वर्जित छ अर्थात् वर-वधू ज्येष्ठ गर्भका र ज्येष्ठ महीना समेत भएमा त्यसैलाई तीन ज्येष्ठ भनेर भन्दछन्। कुनै-कुनै आचार्यको यस्तो मत पनि छ कि कृत्तिका नक्षत्रमा सूर्य भएका वेला ज्येष्ठ भए पनि विवाह गर्न असल हुन्छ, तर कुनै आचार्यका मतमा राम्रो हुँदैन ॥२७६॥

* विवाहमण्डपादिकमुहूर्तः *

चित्राविशाखाशततारकाश्विनी
ज्येष्ठाभरण्यां शिवभाच्चतुष्टयम् ॥
हित्वा प्रशस्तं फलतैलवेदिका-
प्रदानकं कण्डनमण्डपादिकम् ॥२७७॥

चित्रा, विशाखा, शतभिषा, अश्विनी, ज्येष्ठा, भरणी, आर्द्रा, पुनर्वसु, पुष्य र अश्लेषा यी नक्षत्र छोड़ेर अरू जो शेष नक्षत्र छन् उनमा फलदान, तैल-पूजन, वेदी बनाउनु, कण्डन अर्थात् अन्न कुट्नू र मण्डप छाउनु असल हुन्छ अथवा जो विवाहसम्बंधी काम छन् ती सबै विवाहमा कहिएका जति नक्षत्रमा गराउनु उचित हुन्छ ॥२७७॥

* विवाहादिनिषेधज्ञानम् *

सुतपरिणयात्षण्मासान्तः सुताकरपीडनं
न च निजकुले तद्वद्वा मुण्डनादपि मुण्डनम् ॥
न च सहजयोर्देये भ्रात्रोः सहोदरकन्यके
न सहजसुतोद्वाहोऽब्दार्धे शुभे न पितृक्रिया ॥२७८॥
चूडाव्रतं चापि विवाहतो व्रता-
च्चूडा च नेष्टा पुरुषत्रयान्तरे ॥
वधूप्रवेशाच्च सुताविनिर्गमः
षण्मासतो वाऽब्दविभेदतः शुभः ॥२७९॥

आफ्ना कुलमा पुत्रको विवाह गरेको ६ महीनासम्म पुत्रीको विवाह वर्जित छ। उसै गरी मुण्डन ( क्षौरकर्म ) गर्न पनि वर्जित छ। एकै उदरका दाजु-भाई र दिदी-बहिनीको एकै साथ विवाह गर्नु हुँदैन। फेरि विवाहादि शुभकार्यमा पितृश्राद्धादि अशुभ कार्यादि गर्नु

उचित हुँदैन। अर्थात् विवाहादि शुभमुहूर्त यस्तो हुनु पर्छ कि पितृ-श्राद्धादि मङ्गल कार्यका दिन नपरोस्। पिता, पितामह, प्रपितामह (बाबू, बुढ़ा-बाबू, बराज्यू) यी तीन पुरुषमा कसैको विवाह भएका ६ मास भित्र कसैको उसै कुलमा मुण्डनादि कार्य अर्थात् क्षौर,व्रतबन्ध र त्यसका छ महीना भित्र छोरीलाई मैतालू पठाउनु वा वधूप्रवेश गरेका अनन्तर फेरि पतिका घर पठाउनु शुभ हुँदैन। यदि यसमा सारै आवश्यक परे संवत्सरका भेदले मात्र शुभ हुन्छ अन्यथा हुँदैन। जस्तै माघमा कसैको विवाह भयो भने संवत्सरका भेदले वैशाखमा मुंडन, यज्ञोपवीत आदि पूर्वोक्त कार्य गर्नु शुभ हुन्छ ॥२७८-२७९॥

* पञ्चशलाकावेधचक्रम् *

अपि तिर्यग्गतोर्ध्वपञ्चरेखाः प्रतिकोणं द्वयमग्निमीशकोणे॥
इतराणि लिखेत्क्रमेण भानिप्रथितं पञ्चशलाकचक्रमुक्तम्॥
यदृक्षगो यः खचरः स तत्र प्रलेखनीयो गणकैस्तु पूर्वैः॥
या पौर्णमासी निकटे विवाहात्तत्तारकस्थो विधीरत्र देयः॥

पाँचरेखा तेर्छा, पाँच रेखा ठाड़ा लेख्नु र पञ्चशलाका चक्र बनाउनु कोणमा दुइ दुइ रेखा लेख्नु। उसमा ईशान दिशादेखि लिएर कृत्तिकादि २८ नक्षत्र लेख्नु। जुन नक्षत्रमा जुन ग्रह छ त्यो पनि सबै लेख्नु र विवाहका समीपमा जुन पूर्णिमा छ त्यो पूर्णिमाको जो नक्षत्र छ उसै नक्षत्रमा चन्द्रमा लेख्नू॥ २८०-२८१॥

* पञ्चशलाकावेधफलम् *

एकरेखास्थितिर्वेधो दिननाथादिभिर्ग्रहैः।
विवाहे तत्र मासान्ते न जीवति कदाचन ॥२८२॥

एकै रेखामा परस्पर विवाहका नक्षत्रमा ग्रह भए भने वेध हुन्छ। उसमा विवाह भयो भने एक महीना पछि अशुभ हुन्छ ॥२८२॥

* पञ्चशलाकाचक्रन्यासः *




* लत्तादोषज्ञानम् *

सूर्यो द्वादशमष्टमं रविसुतः षष्ठं गुरुर्भूमिज-
स्तार्तीयैकमथो निहन्ति पुरतो नक्षत्रकं लत्तया ।।
द्वाविंशं तुहिनांशुकश्च नवमं राहुर्बुधः सप्तमं
शुक्रः पञ्चमकं तु पृष्ठत इह प्रायेण लत्तां त्यजेत् ।।२८३।।

सूर्य आफ्ना नक्षत्रदेखि बाह्रौं नक्षत्रमा लत्ता मार्दछ, शनि आठौंमा, बृहस्पति छैठामा, मंगल तेस्रामा लत्ता मार्दछ । यी ग्रहले आफ्ना आदिका नक्षत्रमा मार्दछन् । तथा चन्द्रमा आफ्ना स्थानदेखि बाईसौं नक्षत्रमा मार्दछ । राहुले आफूदेखि नवौं नक्षत्रमा लात मार्दछ ।' बुध सातौं, शुक्र पाँचौं नक्षत्रमा लत्ता मार्दछ । यी ग्रह आफूदेखि पछाडिका नक्षत्रमा लात मार्छन् । यो लत्ता-दोष विवाहमा वर्जित गर्नुपर्छ।।२८३।।

* पातदोषज्ञानम् *

शूलस्य गण्डस्य च वैधृतेश्च
साध्यव्यतीपातकहर्षणानाम् ।।

यत्तारकं स्यादवसानसंस्थं-
तत्पातितं बङ्गकलिङ्गदुष्टम् ॥२८४॥

शूल, गण्ड, वैधृति, साध्य, व्यतीपात, हर्षण यी योगको अन्त हुने नक्षत्रमा पातदोष लाग्दछ। बङ्ग तथा कलिङ्ग देशमा वर्जित छ ॥२८४॥

* युतिदोषज्ञानम् *

यत्र गेहे भवेच्चन्द्रो ग्रहस्तत्र यदा भवेत् ।
युतिदोषस्तदा ज्ञेयो विना शुक्रं शुभाशुभम् ॥२८५॥
रविणा संयुतो हानिं भौमेन निर्धनं शशी ।
करोति मूलनाशं च राहुकेतुशनैश्चरैः ॥२८६॥
वर्गोत्तमगते चन्द्रे स्वोच्चेमित्रर्क्षगे तथा ।
युतिदोषश्च न भवेद्दम्पत्योः श्रेयसी सदा ॥२८७॥

जस घरमा चन्द्रमा छ उसै घरमा अरू कुनै ग्रह भए युतिदोष जान्नु । परन्तु शुक्रलाई छोड़ेर अन्य अशुभ हुन् । अर्थात् शुक्र शुभ हुन्छ, सूर्यसंयुक्त भएमा हानि, मङ्गलयुक्त भए मृत्यु तथा राहु, केतु, शनैश्चर युक्त भए मूल-नाश गर्छ । अब परिहार लेखिन्छ— चन्द्रमा वर्गोत्तम होस् अर्थात् जस ग्रहको राशिमा छ उसैको नवांश होस् अथवा उच्चको होस् तथा मित्रका घरमा भएमा पनि युतिदोष हुँदैन । दम्पति अर्थात् स्त्री-पुरुष दुवै सुखी होलान् ॥२८५–२८७॥

* यामित्रदोषज्ञानम् *

पाणिग्रहस्य शीतांशोर्नक्षत्रं यच्चतुर्दशम् ।
नक्षत्रं खेटयुक्तं चेद्यामित्रं स्याद्विगर्हितम् ॥२८८॥

विवाह नक्षत्रदेखि चौधौं नक्षत्रमा कुनै ग्रह भएमा यामित्र दोष हुन्छ त्यो दोषवर्जित जान्नु ॥२८८॥

* पञ्चकदोषज्ञानम् *

रविक्रान्तियातांशयुक्ताश्च तिथ्यो-
रविर्दिग्गजाः सिन्धवः खेटभक्ताः ।
भवेत्पञ्चकं रोगवह्नीशचौर-
मृतिर्दोषमेनं प्रजह्याद्विवाहे ॥२८८॥

सूर्यका गतांशमा पन्द्र, बाह, दश, आठ, चार यी अंक अलग अलग राखेर जोड्नु, उनै अङ्कमा नौको भाग दिनु शेष पाँच बचेमा क्रमैले पाँच स्थानमा पाँच पञ्चक (बाण) हुन्छ रोग १ अग्नि २ राज ३ चौर ४ मृत्यु ५ यी बाण क्रमैले जान्नु यी विवाहमा वर्जित गर्नू ।

* बाणचक्रं सूर्यांशेषु *

| रो. | अ. | नृ. | चो | मृ. |
|---|---|---|---|---|
| ८ | २ | ४ | ६ | १ |
| १७ | ११ | १३ | १५ | १० |
| २६ | २० | २२ | २४ | १९ |
| | २९ | | | २८ |

यो बाण-चक्रबाट बाण हेर्दा सूर्यका अंशबाट हेर्नू गतेबाट हेर्दा मिल्दैन ॥ २८९ ॥

* पञ्चकदोषपरिहारः *

रात्रौ चौररुजौ दिवा नरपतिर्वह्निः सदा सन्ध्ययो-
र्मृत्युश्चाथ शनौ नृपो विदि मृतिर्भौमेऽग्निचौरो रवौ ॥
रोगोऽथ व्रतगेहगोपनृपसेवायानपाणिग्रहे-
वर्ज्यं तत्क्रमतो बुधैरुगनलक्ष्मापालचौरामृतिः ॥२९०॥

रात्रिमा चौर वा रोगपञ्चक वर्जित हुन्छ, दिनमा नृपपञ्चक र अग्निपञ्चक सदैव वर्जित हुन्छ । फेरि दुवै संध्याकालमा मृत्युपञ्चक वर्जित छ । अथ वारपरत्वेन परिहारः–शनिवार नृपपञ्चक, बुधवार मृत्युपञ्चक, मंगलवार अग्नि वा चौरपञ्चक, रविवार रोगपञ्चक वर्जित हुन्छ । अथ

कार्यभेदन परिहारः—जनै (व्रतबन्ध) मा रोगपञ्चक, घर वनाउँदा अग्निपञ्चक वर्जित हुन्छ। राजसेवामा नृपपञ्चक तथा यात्रामा चौरपञ्चक र विवाहमा तथा अरू सबै काममा मृत्युपञ्चक त्याज्य हुन्छ ॥ २९० ॥

* विवाहाङ्गे ग्रहविचारः *

व्यये शनिः खेऽवनिजस्तृतीये
भृगुस्तनौ चन्द्रखला न शस्ताः ।
लग्नेऽट्कविग्लौश्च रिपौ मृतौ ग्लौ-
र्लग्नेऽट् शुभाराश्च मदे च सर्वे ॥२९१॥

किं कुर्वन्ति ग्रहाः सर्वे यस्य केन्द्रे बृहस्पतिः ।
मत्तमातङ्गयूथानां शतं हन्ति च केशरी ॥२९२॥

त्र्यायाष्टषट्सु रविकेतुतमोऽर्कपुत्रा-
स्त्र्यायारिगः क्षितिसुतो द्विगुणायगोऽब्जः ।
सप्तव्ययाष्टरहितौ ज्ञगुरू सितोऽष्ट-
त्रिद्यूनषड्व्ययगृहान् परिहृत्य शस्तः ॥२९३॥

शुक्रो दशसहस्राणि बुधो दशशतानि च ।
लक्षमेकं तु दोषाणां गुरुर्लग्ने व्यपोहति ॥२९४॥

बाह्रौं शनि, दशौं मङ्गल, तेस्रो शुक्र, लग्नमा चन्द्रमा वा क्रूर ग्रह शुभ हुँदैन। लग्नको स्वामी र शुक्र चन्द्रमा छैटौं शुभ हुँदैन। फेरि अष्टम स्थानमा चन्द्रमा, लग्नेश र शुभग्रह, अनि मङ्गल शुभ हुँदैन। सप्तम स्थानमा शुभग्रह शुभ हुँदैन। विवाहका लग्नमा सप्तम स्थानलाई छोडेर यदि अरू केन्द्रमा बृहस्पति भए अरू ग्रहले के गर्न सक्छन् जस्ता प्रकारले मत्तभएका हात्तीका बथानमा पसेर यौटै सिंहले सबैको नाश गर्दछ, उस्तै सम्पूर्ण अरिष्ट ( दोष ) को गुरु नाश गर्दछन्। तेस्रो, एक दश, आठौं, छैठौं सूर्य, शनि, राहु केतु

हउन्, तेस्रो, छैठौं, एकादश मङ्गल होस् फेरि दोस्रो, एकादश चन्द्रमा होस, सातौं, बाह्रौं, आठौं बुध, बृहस्पति नहोस् शुक्र आठौं तेस्रो, सातौं, छैठौं, बाह्रौं वर्जित हुन्छ। लग्नमा शुक्र भए एक हज्जार दोष नाश गर्दछ, लग्नमा बृहस्पति भए एक लाख दोष नाश गरिदिन्छ ॥२९१–२९४॥

* एकार्गलदोषज्ञानम् *

विष्कुम्भ-वज्र-परिघ-व्यतिपात-शूल-
व्याघातवैधृतिषु गण्ड इहातिगण्डे।
एकार्गलो भवति चेत्किल साभिजित्कः
पीयूषकान्तिरसमर्क्षगतो रवेर्भात ॥२९५॥

विष्कुम्भ, वज्र, परिघ, व्यतीपात, शूल, व्याघात, वैधृति, गण्ड, अतिगण्ड यी योगमा एकार्गल योग हुन्छ, सूर्यका नक्षत्रदेखि चन्द्रमाका नक्षत्रसम्म अभिजित् समेत गन्नु र जो नक्षत्र समसंज्ञक हुन्छ फेरि पूर्वोक्तयोग पनि भएमा एकार्गल नामको दोष हुन्छ ॥२९५॥

* उपग्रहदोषज्ञानम् *

शराष्टदिक्शक्रनगातिधृत्यस्तिथिर्धृतिश्च प्रकृतेश्च पञ्च।
उपग्रहः सूर्यभतोऽब्जतारा शुभा न देशे कुरुवाह्लिकानाम् ॥

सूर्यका नक्षत्रदेखि चन्द्रमाका नक्षत्रसम्म गन्दा पाँच, सात, आठ, दश, चौध, उन्नाइस, पन्ध्र, अठार, एक्काईस, बाईस, तेईस, चौबीस, पच्चीस यति नक्षत्र भए उपग्रह-दोष जान्नु, त्यो कुरु वा वाल्हीक देशमा शुभ हुँदैन, अगाड़ि दशदोष सारिणीमा चक्र छ ॥२९६॥

* क्रान्तिदोषज्ञानम् *

पञ्चास्याजौ गोमृगौ तौलिकुम्भौ
कन्यामीनौ कर्क्यली चापयुग्मे।
तत्रान्योन्यं चन्द्रभान्वोर्निरुक्तं
क्रान्तेः साम्यं नो शुभं मङ्गलेषु ॥२९७॥

सिंह-मेष, वृष-मकर, तुला-कुंम्भ, कन्या-मीन, कर्कवृश्चिक, धन-मिथुन यी राशिमा परस्पर सूर्य, चन्द्रमा भए क्रांतिसाम्य दोष हुन्छ, त्यो दोष विवाहमा अशुभ हुन्छ ॥२९७॥

*** दग्धातिथिज्ञानम् ***

मीने चापे द्वितीयार्के चतुर्थीवृषकुम्भयोः ।
मेषकर्कटयोः षष्ठी कन्यायां मिथुनेऽष्टमी ॥२९८॥
दशमो वृश्चिके सिंहे द्वादशी मकरे तुले ।
एतास्तु तिथयो दग्धाः शुभे कर्मणि वर्जिता ॥२९९॥

मीन र धनका सूर्यमा द्वितीया तिथि दग्धा हुन्छ । वृष र कुम्भका सूर्यमा चतुर्थी, मेष र कर्कटका सूर्यमा षष्ठी कन्या र मिथुनका सूर्यमा अष्टमी दग्धा हुन्छ । वृश्चिक र सिंहका सूर्यमा दशमी तिथि दग्धा हुन्छ । मकर र तुलाका सूर्यमा द्वादशी तिथि दग्धा हुन्छ । यी सबै शुभ कार्यमा वर्जित गर्नु ॥२९८–२९९॥

*** विवाहे दशदोषसारिणी ***

१—लत्ता सारिणी मालवदेशे त्याज्या ।

| वि न. | रो. | मृ. | म. | उ.फा. | ह. | स्वा. | ऽनु. | मू. | उ.षा. | उ.भा. | रेवती |
|---|---|---|---|---|---|---|---|---|---|---|---|
| सू. | पू.षा. | उ.षा. | उ.भा. | अश्वि | भ. | रो. | आ. | पुष्य | म. | स्वा. | वि. |
| चं. | पू.भा. | उ.भा. | रो. | आर्द्रा | पुन. | ऽश्ले. | पू.फा. | हस्त. | स्वा. | पू.षा. | उ.षा. |
| मं. | भ. | कृ. | पुष्य | मघा | उ.फा. | ह. | स्वा. | ऽनु. | मू. | शत. | पू.भा. |
| बु. | म. | पू.फा. | वि. | ज्येष्ठा | मू. | उ.षा. | ध. | पू.भा. | रेव. | मृ. | आर्द्रा |
| गु. | उ.भा. | रे. | मृ. | पुन. | पुष्य | मघा. | उ.फा. | चि. | वि. | उ.षा. | श्रवण |
| शु. | पुष्य | ऽश्ले. | चि. | वि. | ऽनु. | मू. | उ.षा. | ध.. | पू.भा. | कृ. | रोहि. |
| श. | श्र. | पू.भा. | कृ. | मृ. | आर्द्रा | पुष्य | मघा. | उ.फा. | चि. | मू. | पू.षा. |
| रा. | उ.फा. | हस्त. | ज्ये. | पू.षा. | उ.षा. | ध. | पू.भा. | रेव. | भ. | पु. | पुष्य |

## २—पात-सारिणी कुरुजाङ्गले त्याज्या

| वि.न. | रोहि. | मृग. | मघा. | उ.फा. | हस्त | स्वाती | ऽनु. | मूल | उ.षा. | उ,भा. | रेव. |
|---|---|---|---|---|---|---|---|---|---|---|---|
| सू. | आर्द्रा | मृग. | अश्वि. | कृत्ति. | भ. | रो. | भरणी | रोहि. | भर. | भर. | अश्वि. |
| सू. | पुन. | आर्द्रा | मृग. | पुन. | आ. | पुष्य | आर्द्रा | ऽश्ले. | न. | पू.फा | म. |
| सू. | पूफा. | म. | ऽश्ले. | पू. फा. | म. | हस्त | पू. फा. | ज्येष्ठा | वि. | उ.फा. | पू. फा. |
| सू. | स्वा. | चि. | हस्त | वि. | स्वा. | श्रव. | पू.षा. | मूल. | ऽनु. | वि. | स्वाती |
| सू. | मू. | ज्ये. | ज्ये. | पू. फा. | शत. | धनि. | उ.षा | धनि. | उ.षा | पू. षा. | मूल |
| सू. | शत. | ध. | रे. | उ.भा. | पू. भा. | रेव. | पू. भा. | रेवती | पू. भा. | श. | धनि. |

## ३—युतिश्चन्द्रयुतक्रूर इति सर्वत्र वर्जयेत्

## ४—वेधयन्त्रम् ।

| वि.न. | रो. | मृग. | मघा | उ. फा. | हस्त | स्वाती | ऽनु. | मूल | उ षा. | उ. भा. | रेव. |
|---|---|---|---|---|---|---|---|---|---|---|---|
| वेध. | ऽभि. | उ.षा. | श्रव. | रेव. | उ. भा. | शत. | भर. | पुन. | मृग. | ह. | उ. भा. |

## ५—यामित्रदोषसारिणी सर्वत्र वर्जयेत् ।

| न. | रो. | मृ. | म. | उ.फा. | हस्त | स्वाती | ऽनु. | मूल | उ. षा. | उ.भा. | रेवती |
|---|---|---|---|---|---|---|---|---|---|---|---|
| या. | ऽनु. | ज्ये. | ध. | पू.भा. | उ, भा. | ऽश्वि. | कृ. | मृ. | पुन. | उ.फा. | ह. |

## ६— मृत्युपंचकयंत्रं सर्वत्र वर्जयेत् ।

| १ | २ | ४ | ६ | ८ | १० | ११ | १३ | १५ | १७ | १९ | २० | २२ | २४ | २६ | २८ | २९ | सू.अ. |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| मृ | ऽग्नि | नृ. | चो | रो | मृ. | ऽग्नि | नृ. | चो | रो. | मृ. | ऽग्नि | नृ. | चो | रो. | नृ. | ऽग्नि | क. |

७ –एकार्गल यन्त्रं काश्मीरदेशे त्याज्यम्

| | | | | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| न. | रो. | मृ. | म. | उ.फ. | ह | स्वा. | ऽनु. | मू. | उ.षा. | उ.भा. | रे. | यो. |
| वि. | पूभा. | श. | पू.षा. | ज्ये. | ऽनु. | स्वा. | ह. | पू. फा. | ऽश्ले. | कृ. | भ. | प्री. |
| आ | रे. | उ.भा. | ऽभि. | पू.षा. | मू. | ऽनु. | स्वा. | ह. | पू.फा | मृ. | रो. | सौ. |
| शो | भ. | ऽश्वि. | ध. | ऽभि. | उ.षा. | मू. | ऽनु. | स्वा. | ह. | पुष्य | आ. | अ. |
| सु. | रो. | कृ. | भा. | ध. | श्र. | उ.षा. | मू. | ऽनु. | स्वा. | ऽश्ले. | पुष्य. | धृ. |
| शू. | आ. | मृ. | रे. | पू.भा. | श. | श्र. | उ.षा. | मू. | ऽनु. | पू.फा. | म. | गं. |
| वृ. | पुष्य. | पुन. | भ. | रे. | उ.भा. | श. | श्र. | उ.षा. | मू. | ह. | उ.फा. | ध्रु. |
| व्या | म. | ऽश्ले. | रो. | भ. | ऽश्वि. | उ.भा. | श. | श्र. | उ.षा. | स्वा. | चि. | ह. |
| व. | उ.फा. | पू.फा. | आ. | रो. | कृ. | ऽश्वि. | उ.भा. | श. | श्र. | ऽनु. | वि. | सि. |
| व्य. | चि. | ह. | पुष्य | आ. | मृ. | कृ. | ऽश्वि. | उ.षा. | श. | मू. | ज्ये. | व. |
| प. | वि. | स्वा. | म. | पुष्य | पु. | मृ. | कृ. | ऽश्वि. | उ.भा. | उ.षा. | पू.षा. | शि. |
| सि. | ज्ये. | ऽनु. | उ.फा. | म. | ऽश्ले. | पुन. | मृ. | कृ. | ऽश्वि. | श्र. | ऽभि. | सा. |
| शु. | पू. षा. | मू. | चि. | उ.फा. | पू.फा. | ऽश्ले. | पुन. | मृ. | कृ. | श. | ध. | नु. |
| ब्र. | ऽभि. | उ.षा. | वि. | चि. | ह. | पू.फा | ऽश्ले. | पुन. | मृ. | उ.भा | पू.भा. | ऐं. |
| वै. | ध. | श्र. | ज्ये. | वि. | स्वा. | ह. | पू.फा. | ऽश्ले. | पुन. | ऽश्वि. | रेव. | वै. |
| यो. | सू. | सू. | सू. | सू. | सू. | सू. | सू. | सू. | सू. | सू. | सू. | यो. |

## ८—उपग्रह यन्त्रं सर्वत्र वर्जयेत्

| वि | रो. | मृ. | म. | उ.फ. | ह. | स्वा. | नु. | मू. | उ.षा. | उ.भा. | रेव. |
|---|---|---|---|---|---|---|---|---|---|---|---|
| ५ | रे. | अ. | आ. | पुष्य. | ऽश्ले. | पू.फा. | ह. | स्वा. | ऽनु. | श्र. | घ. |
| ८ | श. | पू.भा. | कृ. | मृग. | आर्द्रा | पुष्य. | म. | उ.फा. | चि. | म. | पू.षा. |
| १४ | ज्ये. | मू. | रो. | उ.भा | रे. | भ. | रो. | आर्द्रा | पुष्य. | ह. | चि. |
| १८ | चि. | स्वा. | पू.षा. | श्रव. | घ. | पू.भा. | रे. | म. | रो. | ऽश्ले | म. |
| १९ | ह. | चि. | मू. | उ.षा. | श्र. | श. | उ.भा. | ऽश्वि. | कृ. | पुष्य. | ऽश्ले. |
| २२ | म. | पू.फा. | वि. | ज्ये. | मू. | पू.षा. | ध. | पू.भा. | रे. | मृ. | आर्द्रा. |
| २३ | ऽश्ले. | म. | स्वा. | ऽनु. | ज्ये. | पू.षा. | श्र. | श. | उ.भा. | रो. | मृग. |
| २४ | पू. | ऽश्ले. | चि. | वि. | ऽनु. | मू | उ.षा. | घ. | पू.भा. | कृ. | रो. |

## ९—क्रान्तिसाम्यचक्रं सर्वत्र वर्जयेत्

| मे. | वृ. | मि. | क. | सिंह. | कं. | तु. | वृ. | ध. | म. | कुं. | मी. | सू. |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| मि. | म. | ध. | वृ. | मे. | मी. | कुं. | क. | मि. | वृ. | तु. | कं. | चं. |

## १०—दग्धातिथिचक्रं सर्वत्र वर्जयेत्

| मे. | वृ. | मि. | क. | सि. | कं. | तु. | वृ. | ध. | म. | कु. | मी. | सू. |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| ६ | ४ | ८ | ६ | १० | ८ | १२ | १० | २ | १२ | ४ | २ | ति. |

## विश्वाप्रदा ग्रहाः

| सू. | चं. | मं. | बु. | | बृ. | | शु. | | श. | | रा. | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| ११ | २ | १२ | ११ | २ | ११ | ९ | ११ | २ | ११ | ० | ११ | ६ |
| ३ | ३ | ६ | १ | ६ | ६ | २ | ३ | ४ | ३ | ० | १० | ५ |
| | ११ | ३ | ३ | ८ | ४ | ३ | ५ | ९ | ८ | ० | ८ | ३ |
| | | | ९ | १० | १० | ५ | १० | १ | | | | ९ |
| | | | ५ | | | १ | | | | | | |
| ३॥ | ५ | १॥ | २ | | ३ | | २ | | १॥ | | १॥ | |

लग्नाद्वर्जितग्रहाः

| सू. | चं. | मं. | बु. | बृ. | शु. | श. | रा. | लग्नेश |
|---|---|---|---|---|---|---|---|---|
| १<br>७ | १<br>८<br>६ | १<br>८<br>६ | ७<br>८ | ८ | ६<br>७<br>८ | १<br>७ | १<br>७ | ६ |

* लत्तादिदोषपरिहारः *

लत्ता मालवके देशे पातश्च कुरुजाङ्गले ।
एकार्गलं च काश्मीरे वेधं सर्वत्र वर्जयेत् ॥३००॥

लत्तादोष मालव देशमा, पात दोष कुरुजाङ्गल, एकार्गलदोष काश्मीर र अरु बाँकी दोष र वेध दोष सबै देशमा वर्जित छ ।३००।

* शूद्रादीनां पुनर्विवाहार्थं गान्धर्वविवाहः *

गान्धर्वादिविवाहेऽर्काद्वेदनेत्रगुणेन्दवः ।
कुयुगाङ्गानि भूरामत्रिपद्यामशुभाः शुभाः ॥३०१॥

सूर्यका नक्षत्रदेखि चन्द्रनक्षत्रसम्म गनेर गान्धर्व विवाहको विचार गर्नु । चार, दुइ, तीन, एक, एक, चार, छः, एक, तीन फेरि तीन यस क्रमले प्रथम अशुभ फेरि शुभ यै प्रकार जान्नु ॥३०१॥

* गान्धर्वविवाहचक्रम् *

| ४ | २ | ३ | १ | १ | ४ | ६ | १ | ३ | ३ |
|---|---|---|---|---|---|---|---|---|---|
| अ. | शु. | अ. | शु. | अ. | शु. | अ. | शु. | अ. | शु. |

* स्वयंवरकालमुहूर्तः *

पिता पितामहो भ्राता माता बन्धुर्यदा न हि ।
ऋतौ वर्षत्रयादूर्ध्वं कन्या कुर्यात्स्वयंवरम् ॥ ३०२ ॥

कन्याका पिता, पितामह ( बुढा बाबु ), माता, भाई, दाज्यू, आफ्ना बन्धुबान्धवहरू कोही पनि छैनन् भने ऋतु ( रजस्वला )

भएका तीन वर्ष पछि त्यस कन्याले स्वयस्वर अर्थात् आफ्ना इच्छा माफिकको वर वरण गरे हुन्छ ॥२०२॥

* गोधूलिकाज्ञानम् *

यदा नास्तंगतो भानुर्गोधूल्या पूरितं नभः ।
सर्वमङ्गलकार्येषु गोधूलिः शस्यते सदा ॥ २०३ ॥

सूर्य जब अस्त हुनलाग्दछन् र गाईहरुका खुरको धूलो आकाशमा पूरित हुन्छ, उस समय जति मंगल कार्य छन् सब शुभ हुन्छन् ।२०३।

* अन्धादिलग्नज्ञानम् *

दिने सदान्धा वृषमेषसिंहारात्रौ च कन्या मिथुनं कुलीरः।
मृगस्तुलालिर्वधिरोऽपराह्णे सन्ध्यासु कुब्जा घटधन्विमीनाः॥

दारिद्र्यं वधिरतनौ दिवान्धलग्ने
वैधव्यं शिशुमरणं निशान्धलग्ने ।
पङ्ग्वङ्गे निखिलधनानि नाशमीयुः
सर्वत्राधिपगुरुदृष्टिभिर्न दोषः ॥३०५॥

दिनमा वृष, मेष, सिंह र रात्रिमा कन्या मिथुन, कर्क यी लग्न अन्ध हुन्छ; अरू पराह्णमा मकर, तुला, वृश्चिक यी लग्न बहिरा हुन्छन्; फेरि कुम्भ, धन, मीन यी लग्न सन्ध्यामा लङ्गड़ा हुन्छन् ।

बहिरा लग्नमा विवाह भए सदा दारिद्र्य हुन्छ । दिनको अन्धलग्न वैधव्यकारक हुन्छन् । रात्रिका अन्ध लग्नमा विवाह गरे बालक ( छोराछोरी ) हरूको मृत्यु हुन्छ । सन्ध्याका लंगड़ा लग्नमा विवाह गरे धन-नाश हुन्छ । विवाहमा लग्न-स्वामीमाथि बृहस्पतिको दृष्टि भयो भने उपरोक्त दोप लाग्दैन ॥२०४–२०५॥

* द्वितीयप्रकारेण लग्नफलम् *

घस्रेतुलाली वधिरौ मृगाश्वौ रात्रौच सिंहाजवृषा दिवान्धाः।

कन्यानृयुक्कर्कटका निशान्धा दिने घटोऽन्त्ये निशि पंगुसंज्ञः॥
दिवान्धो वरहन्ता च रात्र्यन्धो धननाशकः ।
दुःखदो वधिरो लग्नः कुब्जो वंशविनाशकः ॥३०७॥

दिनको तुला, वृश्चिक लग्न र रात्रिका धन, मकर बहिरा हुन्छन् । सिंह, मेष, वृष यी दिनका अन्धा हुन् । कन्या, मिथुन, कर्क यी रात्रिमा अन्धा हुन् । फेरि दिनको कुम्भ लँगड़ा हुन् । रात्रिको मीन लग्न लँगड़ो हो । फल पूर्वोक्त जान्नु । दोस्रो प्रकार—दिनको अन्धा लग्नले वरलाई हान्छ । रात्रिमा अन्धा लग्नले धन-नाश गर्छ । फेरि बहिरा लग्नमा दुःख हुन्छ । कुब्जा लग्नमा वंशको नाश हुन्छ ॥३०६–३०७॥

* विवाहमध्ये कर्तरीदोषज्ञानम् *

लग्नात्पापावृज्वनृजू व्ययार्थस्थौ यदा तदा ।
कर्तरी नाम सा ज्ञेया मृत्युदारिद्र्यशोकदा ॥३०८॥

विवाहको लग्नदेखि कर्तरीदोष विचार गर्नु । पापग्रह मार्गी भएर लग्नको बाह्रौं होस् र पापग्रह वक्री भएर लग्नका दोस्रो घरमा भए कर्तरीनाम दोष हुन्छ, त्यो दोष मृत्यु, दारिद्र्य, शोक आदि दिने हुन्छ।

* कुलिकयोगज्ञानम् *

सूर्ये च सप्तमी सोमे षष्ठी भौमे च पञ्चमी ।
बुधे चतुर्थी देवेज्ये तृतीया भृगुनन्दने ॥३०९॥
द्वितीया वर्जनीया च प्रतिपच्च शनैश्चरे ।
कुलिकाख्यो हि योगोऽयं विवाहादौ न शस्यते ॥३१०॥

रविवार सप्तमी, सोमवार षष्ठी, मङ्गलवार पञ्चमी, बुधवार चौथी, गुरुवार तृतीया, शुक्रवार द्वितीया, शनिवार परेवा यी तिथि वारमा कुलिकयोग हुन्छ । त्यो विवाहादिकमा शुभ हुँदैन ॥ ३०९–३१० ॥

*** कुलिकयोगचक्रम् ***

| सू. | चं. | मं. | बु. | बृ. | शु | श. | वाराः |
|---|---|---|---|---|---|---|---|
| ७ | ६ | ५ | ४ | ३ | २ | १ | तिथयः |

*** नवांशज्ञानम् ***

**मेषसिंहधनुलग्ने नवांशा मेषतः स्मृताः ।**
**वृषकन्यामृगे लग्ने मकरान्नवमांशकाः ॥३११॥**
**कर्कालिमीनलग्नेषु नवांशाः कर्कतः स्मृताः ।**
**नृयुग्मतौलिकाभेषु तौलितः स्युर्नवांशकाः ॥३१२॥**

मेष, सिंह, धन लग्नको नवांश मेषदेखि गन्नु । तथा वृष, कन्या, मकर लग्नको नवांश मकरदेखि गन्नु । फेरि कर्क, वृश्चिक, मीन (लग्न) को नवांश कर्क देखि गन्नु । मिथुन, तुला, कुम्भ लग्नको नवांश तुलादेखि गन्नु । गन्ने क्रम – तीस अंशको लग्न हुन्छ । उसमा नवांश तीन अंश बीस कलाको भयो । त्यसलाई प्रथम नवांश जान्नु, यसै क्रमले नौ नवांश हुन्छन्, स्पष्ट लग्नमा र स्पष्ट ग्रहमा जति अंश कला व्यतीत भयो उसको नवांश यसै रीतबाट विचार गर्नु॥३११–३१२॥

*** नवांशचक्रम् ***

| अंश।कला | मे. | वृ. | मि. | क. | सिं. | कं. | तु. | वृ. | ध. | म. | कुं. | मी. |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| ३।२० | मे. | म. | तु. | क. | मे. | म. | तु. | क. | मे, | म. | तु. | क.. |
| ६।४० | वृ. | कुं. | वृ. | सिं. | वृ. | कुं. | वृ. | सिं. | वृ. | कुं. | वृ. | सिं. |
| १०।०० | मि. | मी. | ध. | कं. | मि. | मी. | ध. | कं. | मि. | मी. | ध. | कं. |
| १३।२० | क. | मे. | म. | तु. | क. | मे. | म. | तु, | क. | मे. | म. | तु. |
| १६।४० | सिं. | वृ. | कुं. | वृ. | सिं. | वृ. | कुं. | वृ. | सिं. | वृ. | कु. | वृ. |
| २०।०० | कं. | मि. | मी. | ध. | कं. | मि. | मी. | ध. | कं | मि. | मी. | ध. |
| २३।२० | तु. | क. | मे. | म. | तु. | क. | मे. | म. | तु. | क. | मे. | म. |
| २६।४० | वृ. | सिं. | वृ. | कुं. | वृ. | सिं. | वृ. | कुं. | वृ. | सिं. | वृ. | कु. |
| ३०।०० | ध. | कं. | मि. | मी. | ध. | कं. | मि. | मी. | ध. | कं. | मि | मी. |

स्पष्टलग्न ६।१०।२०।२५ तुला लग्न दश अंश, बीस कला, पच्चीस विकला स्पष्ट छ। त्यसको नवांश—

तुलालग्नको नवांश तुलादेखि गनिन्छ, त्यसको दश १० अंश बीस २० कला २५ विकला स्पष्ट छ, त्यसमा ३ अंश २० कलाको १ नवांश हुने हुनाले यहाँ चौथो नवांश भयो, तुला लग्नको तुलैबाट गनिने हुँदा तुलाको चौथो मकर भयो, त्यसको स्वामी शनि भयो।

* होराज्ञानम् *

**होरयोरोजराशौ तु रवीन्दू क्रमतः पती।**
**समराशौ तु चन्द्रार्कौ होरेशौ क्रमतो वदेत् ॥३१३॥**

विषम लग्नमा पन्ध्र अंशसम्म सूर्यको होरा हुन्छ, फेरि पछिको पन्ध्र अंश चन्द्रमाको होरा हुन्छ, फेरि समराशिमा प्रथम पन्ध्र अंश-चन्द्रमाको होरा हुन्छ, फेरि पन्ध्र अंश सूर्यको होरा हुन्छ ॥३१३॥

* होराचक्रम् *

| राशि | मे. | वृ. | मि. | क. | सि. | कं. | तु. | वृ. | ध. | म. | कुं. | मी. |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| १५ अंश | सू. | चं. | सू. | चं. | सू. | चं. | सू. | चं. | सू. | चं. | सू. | चं. |
| ३० अंश | चं. | सू. | चं. | सू. | चं. | सू. | चं. | सू. | चं. | सू. | चं. | सू. |

* द्रेष्काणज्ञानम् *

**द्रेष्काण आद्ये लग्नस्य द्वितीयः पञ्चमस्य च।**
**द्रेष्काणश्च तृतीयश्च लग्नान्नवमराशितः ॥३१४॥**

* द्रेष्काणको प्रकार *

१ राशिको तीन भाग गर्दा दश अंश हुन्छ, त्यै दश अंशको एक द्रेष्काण हुन्छ। उसमा प्रथम दश अंशसम्म वा जुन राशिको द्रेष्काण जान्नु छ, त्यस लग्नको प्रथम द्रेष्काण १० अंश भित्र भए त्यसै राशिको स्वामी प्रथम द्रेष्काणको स्वामी हुन्छ। दोस्रो भाग अर्थात् ११ देखि ऊपर २० अंशसम्म भए दोस्रो द्रेष्काण हुन्छ,

* राशिहरूका स्वामी पृ० ७० मा लेखिएको छ।

त्यसका पाँचौं राशिको स्वामी द्रेष्काण-पति हुन्छ। तेस्रो भाग अर्थात् २१ देखि ३० अंशतक भए तेस्रो द्रेष्काण हुन्छ, त्यसमा नवौं राशिको स्वामी द्रेष्काणको स्वामी हुन्छ। तल द्रेष्काण चक्र छ॥ ३१४ ॥

* द्रेष्काणचक्रम् *

| राशि | मे. | वृ. | मि. | क. | सिं. | कं. | तु. | वृ. | ध. | म. | कु. | मी. | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| प्रथम द्रेष्काण | मे. | वृ. | मि. | क. | सिं. | कं. | तु. | वृ. | ध. | म. | कु. | मी. | द्रेष्काणका रा० |
| अंशतक १० | मं. | शु. | बु. | चं. | सू. | बु. | शु. | मं. | वृ. | श. | श. | वृ. | द्रेष्काणका स्वा० |
| द्वितीय द्रेष्काण | सिं. | क. | तु. | वृ. | ध. | म. | कुं. | मी. | मे. | वृ. | मि. | क. | द्रेष्काणका रा० |
| अंशतक २० | सू. | बु. | शु. | मं. | वृ. | श. | श. | वृ. | म. | शु. | बु. | चं. | द्रेष्काणका स्वा० |
| तृतीय द्रेष्काण | ध. | म. | कु. | मी. | मे. | वृ. | मि. | क. | सिं. | क. | तु. | वृ. | द्रेष्काणका रा० |
| अंशतक ३० | वृ. | श. | श. | वृ. | म. | शु. | बु. | चं. | स. | बु | शु. | म. | द्रेष्काणका स्वा० |

* त्रिशांशज्ञानम् *

कुजार्कीज्यज्ञशुक्राणां बाणेष्वष्टाद्रिमार्गणः।
भागः स्युर्विषमे भे तु समराशौ विपर्ययात् ॥३१५॥
कुजार्किगुरुविच्छुक्रास्त्रिंशांशपतयः क्रमात्।
पञ्चपञ्चाष्टशैलेषु भागानां विषमे गृहे ॥३१६॥

मेष, मिथुन, सिंह आदि विषमराशिको प्रथम त्रिंशांश पाँच अंशको हुन्छ उसको स्वामी मङ्गल हो। तदन्तर पाँच अंशको स्वामी शनि, तदनन्तर आठ अंशको स्वामी बृहस्पति, तदनन्तर सात अंशको स्वामी बुध हुन्छ। तदन्तर पाँच अंशको स्वामी शुक्र जान्नु, समराशिमा विलोम अर्थात विपरीत जान्नु। अब खुलासा समराशिको त्रिंशांश लेखिन्छ, समराशिमा प्रथम पाँच अंशको स्वामी शुक्र, तदनन्तर सात अंशको स्वामी बुध, तदनन्तर आठ अंशको स्वामी बृहस्पति, फेरि पाँच अंशको स्वामी शनि, फेरि पाँच अंशको स्वामी मङ्गल जान्नू ॥३१५–३१६॥

* विषमत्रिंशांशचक्रम् *   * समत्रिंशांशचक्रम् *

| अं. | मे. | मि. | सिं. | तु. | ध. | कुं. | योगः | राशि | अं. | वृ. | क. | कं. | वृ. | म. | मी. | योगः |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| ५ | मं. | मं. | मं. | म. | मं. | मं. | ५ | स्वामी | ५ | शु. | शु. | शु. | शु. | शु. | शु. | ५ |
| ५ | श. | श. | श. | श. | श. | श. | १० | स्वामी | ७ | बु. | बु. | बु. | बु. | बु. | बु. | १२ |
| ८ | बृ. | बृ. | बृ. | बृ. | बृ | बृ. | १८ | स्वामी | ८ | बृ. | बृ. | बृ. | बृ. | बृ. | बृ. | २० |
| ७ | बु. | बु. | बु. | बु. | बु. | बु. | २५ | स्वामी | ५ | श. | श. | श. | श. | श. | श. | २५ |
| ५ | शु. | शु. | शु. | शु. | शु. | शु. | ३० | स्वामी | ५ | म. | म. | म. | म. | म. | म. | ३० |

* द्वादशांशज्ञानम् *

**स्याद्द्वादशांश इह राशित एव गेहं**
**होराऽथ दृक्कनवमांशकसूर्यभागाः ॥**
**त्रिंशांशकश्च षडिमे कथितास्तु वर्गाः**
**सौम्यैः शुभं भवति चाशुभमेव पापैः ॥३१७॥**

दुइ अंश तीस कलाको एक द्वादशांश हुन्छ, यस निमित्त एक राशिमा १२द्वादशांश हुन्छ, जस राशिमा द्वादशांशको विचार गर्नुछ, उसै राशिदेखि लिएर क्रमैले १२ राशिहरूको द्वादशांश सिद्ध हुन्छ ॥

मेषमा पहिलो द्वादशांश मेषको, दोस्रो वृषको, तेस्रो मिथुनको, चौथो कर्कको. पाँचौं सिंहको, छैठौं कन्याको, सातौं तुलाको, आठौं वृश्चिकको, नवौं धनको, दशौं मकरको, एघारौं कुम्भको, बाहौं मीनको द्वादशांश हुन्छ। यसै प्रकार वृषमा पैह्लो वृषको, दोस्रो मिथुनको, तेस्रो कर्कको, चौथो सिंहको इत्यादि क्रमले बाहौं मेषको द्वादशांश हुन्छ। मिथुन इत्यादि सबै राशिको द्वादशांश चक्रबाट संझनु पर्छ।

गृह, होरा, द्रेष्काण, नवांश, द्वादशांश, त्रिंशांश यी ६ वर्ग कहिएका छन्। यी षड्वर्गमा शुभ भए शुभ र पापग्रह भए अशुभ जान्नू ॥३१७॥

* ग्रहाणां गेहचक्रम् *

| सू. | चं. | मं. | बु. | बृ. | शु. | श. | ग्रहाः |
|---|---|---|---|---|---|---|---|
| सिं. | क. | मे वृश्चि. | मि. कं | धन.मी. | वृ. तु. | म. कुं. | राशयः |

## * द्वादशांशचक्रम् *

| अंश कला | मे. | वृ. | मि. | क. | सिं. | कं. | तु. | वृ. | ध. | म. | कुं. | मी. | लग्न |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| २।३० | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | ९ | १० | ११ | १२ | राशि |
| | मं. | शु. | बु. | चं. | सू. | बु. | शु. | मं. | वृ. | श. | श. | वृ. | ग्रह |
| ५ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | ९ | १० | ११ | १२ | १ | राशि |
| | शु. | बु. | चं. | सू. | बु. | शु. | मं. | वृ. | श. | श. | [illegible] | मं. | ग्रह |
| ७।३० | ३ | ४ | ५ | ६ | ७ | ८ | ९ | १० | ११ | १२ | १ | २ | राशि |
| | बु. | चं. | सू. | बु. | शु. | मं. | वृ. | श. | श. | वृ. | मं. | शु. | ग्रह |
| १० | ४ | ५ | ६ | ७ | ८ | ९ | १० | ११ | १२ | १ | २ | ३ | राशि |
| | चं. | सू. | बु. | शु. | मं. | वृ. | श. | श. | वृ. | मं. | शु. | बु. | ग्रह |
| १२।३० | ५ | ६ | ७ | ८ | ९ | १० | ११ | १२ | १ | २ | ३ | ४ | राशि |
| | सू. | बु. | शु. | मं. | वृ. | श. | श. | वृ. | मं. | शु. | बु. | चं. | ग्रह |
| १५ | ६ | ७ | ८ | ९ | १० | ११ | १२ | १ | २ | ३ | ४ | ५ | राशि |
| | बु. | शु. | मं. | वृ. | श. | श. | वृ. | मं. | शु. | बु. | चं. | सू. | ग्रह |
| १७।३० | ७ | ८ | ९ | १० | ११ | १२ | १ | २ | ३ | ४ | ५ | ६ | राशि |
| | शु. | मं. | वृ. | श. | श. | वृ. | मं. | शु. | बु. | चं. | सू. | बु. | ग्रह |
| २० | ८ | ९ | १० | ११ | १२ | १ | २ | ३ | ४ | ५ | ६ | ७ | राशि |
| | मं. | वृ. | श. | श. | वृ. | मं. | शु. | बु. | चं. | सू. | बु. | शु. | ग्रह |
| २२।३० | ९ | १० | ११ | १२ | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | राशि |
| | वृ. | श. | श. | वृ. | मं. | शु. | बु. | चं. | सू. | बु. | शु. | मं. | ग्रह |
| २५ | १० | ११ | १२ | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | ९ | राशि |
| | श. | श. | वृ. | मं. | शु. | बु. | चं. | सू. | बु. | शु. | मं. | वृ. | ग्रह |
| २७।३० | ११ | १२ | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | ९ | १० | राशि |
| | श. | वृ. | मं. | शु. | बु. | चं | सू. | बु. | शु. | मं. | वृ. | श. | ग्रह |
| ३० | १२ | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | ९ | १० | ११ | राशि |
| | वृ. | मं. | शु. | बु. | चं. | सू. | बु. | शु. | मं. | वृ. | श. | श. | ग्रह |

## * होडाचक्रम् *
### वरकन्ययोर्भस्य मेलापकविचारोपयोगी

| भानां वर्णाः | चु चे चोला (ल) | लि लु ले लो | आ (अ) ई उ ए | वा ओवा (व) वि वु | वे वो (क) कि का | कु घ ङ छ | के को (ह) हि हा | हू हे हो ड़ा (ड) | डि डु डे डो | मा (म) मि मु मे | मोटा टि टु |
|---|---|---|---|---|---|---|---|---|---|---|---|
| नक्षत्र | अश्वि | भरणी | कृत्तिका | रोहिणी | मृगशिरा | आर्द्रा | पुन० | पुष्य | आश्लेषा | मघा | पूर्वफा० |
| राशि | मेष | मेष | १मे३वृष | वृष | वृ२मि२ | मि० | मि३ क१ | कर्क | कर्क | सिंह | सिंह |
| वर्ण | क्षत्री | क्षत्री | क्ष१ वै३ | वैश्य | वै२ शू२ | शूद्र | शू३ वि१ | विप्र | विप्र | क्षत्री | क्षत्री |
| वश्य | चतुःपद | चतुःपद | चतुःपद | चतुःपद | च २ द्वि२ | द्विपद | द्वि३ ज१ | जल चर | जल चर | चतुःपद | चतुःपद |
| योनि | अश्व | गज | छाग | सर्प | सर्प | श्वान | मार्जार | छाग | मार्जार | मूषक | मूषक |
| योनिवैर | महिष | सिंह | वानर | नकुल | नकुल | मृग | मूषक | वानर | मूषक | मार्जार | मार्जार |
| राशीश | भौम | भौम | भौ१ शु३ | शुक्र | शु.२बु.२ | बुध | बु३ चं१ | चन्द्र | चन्द्र | सूर्य | सूर्य |
| गण | देव | मनुष्य | राक्षस | मनुष्य | देव | मनुष्य | देव | देव | राक्षस | राक्षस | मनुष्य |
| नाड़ी | आदि | मध्य | अन्त्य | अन्त्य | मध्य | आदि | आदि | मध्य | अन्त्य | अन्त्य | मध्य |

| | | | | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| टे टो (प) पी पा | पुष (ख) ण ठ | पे पो (र) रि रा | रु रे रो ता | ति तु ते तो | ना (न) नी नू ने | नो या (य) यि यु | ये यो भ भि (भा) | भू (ध) धा फा(ढ) ढा | भे भो (ज) जि जा | खि खु खे खो | गा गि (न) गु गे | गो सा (स) सि सु |
| उत्तरफा | हस्त | चित्रा | स्वाती | विशाखा | अनुराधा | ज्येष्ठा | मूल | पूर्वाषाढ़ा | उत्तराषा० | श्रवण | धनिष्ठा | शतभिषा |
| सिं१क३ | कन्या | क२तु२ | तुला | तु३ वृ१ | वृश्चिक | वृश्चिक | धनु | धनु | ध१म३ | मकर | म२कुं२ | कुम्भ |
| क्ष० १वै३ | वैश्य | वै२शू२ | शूद्र | शू३वि१ | विप्र | विप्र | क्षत्री | क्षत्री | क्ष१वै३ | वैश्य | वै२शू२ | शूद्र |
| च१द्वि३ | द्विपद | द्विपद | द्विपद | द्वि३की१ | कीट | कीट | द्विपद | द्विपद | द्वि१च३ | चतुःपद | च२द्व२ | द्विप |
| गौ | महिष | व्याघ्र | महिष | व्याघ्र | मृग | मृग | श्वान | वानर | नकुल | वानर | सिंह | अश्व |
| व्याघ्र | अश्व | गौ | अश्व | गौ | श्वान | श्वान | मृग | छाग | सर्प | मेष | गज | महिष |
| सू१ बु३ | बुध | बु२शु२ | शुक्र | शु३भौ१ | भौम | भौम | गुरु | गुरु | गुरु१श३ | शनि | शनि | शनि |
| मनुष्य | देव | राक्षस | देव | राक्षस | देव | राक्षस | राक्षस | मनुष्य | मनुष्य | देव | राक्षस | राक्षस |
| आदि | आदि | मध्य | अन्त्य | अन्त्य | मध्य | आदि | आदि | मध्य | अन्त्य | अन्त्य | मध्य | आदि |

| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| से सो (दा) दि दा | पूर्वभाद्र | कुंभमी२ | शूद्र वि२ | द्विजल२ | सिंह | गज | गुरु | देव | अन्त्य |
| दु (थ) झ ञ | उत्तर भाद्र | मीन | विप्र | जलचर | गौ | व्याघ्र | गुरु | मनुष्य | मध्य |
| दे दो (चा) चि चा | रेवती | मीन | विप्र | जलचर | सिंह | गज | गुरुगुरु | मनुष्य | आदि |

* वर्णादिगुणज्ञानम् *

वर्णो वश्यं तथा तारा योनिश्च ग्रहमैत्रकम् ।
गणमैत्रं भकूटं च नाडी चैते गुणाधिकाः ॥३१८॥

वर्ण, वश्य, तारा, योनि, ग्रहमैत्री, गणमैत्री, भकूट, नाड़ी यी वर्णादिक एकदेखि एक अधिक गुणवाला हुन्छन् ॥३१८॥

* तत्रादौ वर्णज्ञानम् *

मीनालिकर्कटा विप्राः क्षत्री मेषो हरिर्धनुः ।
शूद्रयुग्मं तुलाकुम्भौ वैश्यकन्या वृषो मृगः ॥३१९॥
नोत्तमामुद्वहेत्कन्यां ब्राह्मणीं च विशेषतः ।
म्रियते हीनवर्णश्च ब्रह्मणा सदृशो यदि ॥३२०॥
विप्रवर्णेषु या नारी शूद्रवर्णेषु यः पतिः ।
ध्रुवं भवति वैधव्यं शुक्रस्य दुहिता यदि ।३२१॥

मीन, वृश्चिक, कर्क यी राशि ब्राह्मण वर्ण हुन् । मेष, सिंह, धन यी राशि क्षत्रिय वर्ण हुन् । मिथुन, तुला, कुम्भ यी राशि शूद्र वर्ण हुन् । कन्या, वृष, मकर यी राशि वैश्य वर्ण हुन् । वर्णमा श्रेष्ठ कन्या उत्तम हुन्न, ब्राह्मणी विशेष वर्जित हुन्छ, फेरि वर्णहीन वरको मृत्यु हुन्छ, चाहे त्यो ब्रह्माकै समान किन नहोस् । ब्राह्मण वर्णकी स्त्री र पति शूद्रवर्ण भए शीघ्रै विधवा हुन्छे । चाहे त्यो शुक्राचार्यकै कन्या किन नहोस ॥३१९-३२१॥

* वर्णचक्रम् *

| वर्ण | ब्राह्मण | क्षत्रिय | वैश्य | शूद्र |
|---|---|---|---|---|
| राशि | १२।८।४ | १।५।९ | ६।२।१० | ३।७।११ |

* वश्यज्ञानम् *

मकरस्य पूर्वभागो मेषसिंहौ धनुर्वृषः ।
चतुष्पदाःकीटसंज्ञः कर्कः सर्पश्च वृश्चिकः ॥३२२॥
तुला च मिथुनं कन्या पूर्वार्धो धनुषस्तथा ।
द्विपदाख्या पश्चिमार्धं मकरस्य तथा पुनः ॥३२३॥
कुम्भमीनौ जलचरा राशयः परिकीर्तिताः ।
सिंहं विना वशाः सर्वे द्विपदानां चतुष्पदाः ॥३२४॥
भक्ष्या जलचरास्तेषां भयस्थाने सरीसृपाः ॥३२५॥

मकर राशिको पहिलो भाग अर्थात् आधा मकर र मेष, सिंह, धन राशिको दोस्रो भाग फेरि वृष यी राशिको चतुष्पदसंज्ञा हो। फेरि अरू कर्कको कीटसंज्ञा हो। वृश्चिकको सर्पसंज्ञा हो। तुला मिथुन, कन्या, धनको पैह्लो भाग यिनको द्विपदसंज्ञा हो। अरू मकरको दोस्रा भाग, कुम्भ, मीन जलचर हो। यसप्रकार कहिएका द्विपदको सिंहबाहेक सबै वश्य हुन्, अरु जलचर द्विपदको भोजन हो, सर्पदेखि द्विपदलाई भय हुन्छ ॥३२५॥

* वश्यचक्रम् *

| | |
|---|---|
| मकर पूर्वार्ध। मेष। सिंह। धन परार्ध। वृष | चतुष्पद |
| कर्क | कीट |
| वृश्चिक | सर्प |
| तुला। मिथुन। कन्या। धन-पूर्वार्ध | द्विपद |
| मकर परार्ध। कुम्भ। मीन | जलचर |

* ताराज्ञानम् *

कन्यर्क्षाद्वरभं यावत्कन्याभं वरभादपि ।
गणयेन्नवहृत् शेषे त्रीष्वद्रिभमसत्स्मृतम् ॥३२६॥

कन्याका नक्षत्रदेखि वरका नक्षत्रसम्म गन्नु, अरु वरका नक्षत्रदेखि कन्याका नक्षत्रसम्म गन्नु दुवै अङ्क फरक फरक गरेर स्थापित गर्नु उसमा नौको भाग दिनु, तीन, पाँच वा सात शेष रह्यो भने अशुभ तारा जान्नु ॥३२६॥

* योनिज्ञानम् *

अश्विन्याः शतभस्याश्वो महिषः स्वातिहस्तयोः ।
पूभाधनिष्ठयोः सिंहो भरण्यन्त्यभयोर्गजः ॥३२७॥
कृत्तिकापुष्ययोर्मेषः श्रुतिपूषाढयोः कपिः ।
ऊषाभिजिद्द्वयोर्बभ्रूरोहिणीमृगयोरहिः ॥३२८॥
ज्येष्ठानुराधयोरेणः श्वा मूलाद्राभयोस्तथा ।
पुनराश्लेषयोरोतुराखुः पूफामघर्क्षयोः ॥३२९॥
विशाखाचित्रयोर्व्याघ्रो गौरुफोत्तरभाद्रयोः ।
मैत्री वैरं विचार्यैवं भानां प्रोक्तास्तु योनयः ॥३३०॥
गोव्याघ्रं महिषाश्वं च श्वैणं मार्जारमूषकम् ।
सिंहेभं कपिमेषं च वैरं तु नकुलोरगम् ॥३३१॥
त्याज्यं परस्परं वैरं दम्पत्योः स्वामिभृत्ययोः ॥३३२॥

अश्विनी शतभिषा नक्षत्रको अश्व ( घोड़ा ) योनि हो । स्वाती र हस्त नक्षत्रको महिष पूर्वाभाद्रपदा धनिष्ठा नक्षत्रको सिंह, भरणी र रेवती नक्षत्रको गज, कृत्तिका र पुष्य नक्षत्रको मेष ( भेडो ), श्रवण, पूर्वाषाढ़ा यी दुवै नक्षत्रको वानर, रोहिणी र मृगशिरा

नक्षत्रको सर्प, ज्येष्ठा र अनुराधा नक्षत्रको मृग ( हरिण ), मूल र आर्द्रा नक्षत्रको कुक्कुर, पुनर्वसु र आश्लेषाको विरालो, पूर्वाफाल्गुनी र मघाको मूषक, विशाखा र चित्राको व्याघ्र, उत्तरा फाल्गुनी र उत्तरा भाद्रपदको गौ योनि हो । यही प्रकारले मैत्री र योनि वैरको विचार गर्नु ॥ ३२७–३३२ ॥

* योनिवैरज्ञानम् *

गौको बाघ, महिपको घोड़ा, कुत्ताको मृग, सिंहको हस्ती, बानरको भेडा, अरु नेउरीको सर्प परम वैरत्व हुन्छ । यस निमित्त विवाह र नोकरीमा यी सबै वर्जित गर्नू ।

* योनिचक्रम् *

| नक्षत्र | अ. श. | स्वा. ह. | ध. पूर्वाभा. | भ. रे. | पुष्य. कृ. | श्र. पू. षा. | उ. षा. अभि. | मृ. रो. | ज्ये. अनु. | मू. आ. | पुनर्वसु श्ले. | म. पू. फा. | वि. चि. | उ.भा. उ फा. |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| योनि | अश्व | महिष | सिंह | हस्ती | मेष | वानर | नकुल | सर्प | हरिण | श्वान | मार्जार | मूषक | व्याघ्र | गौ |

* ग्रहमैत्रीज्ञानम् *

मित्राणि द्युमणेः कुजेज्यशशिनः शुक्रार्कजौ वैरिणौ
सौम्यश्चास्य समो विधोर्बुधरवी मित्रे न चास्य द्विषत् ॥
शेषाश्चास्य समाः कुजस्य सुहृदश्चन्द्रेज्यसूर्या बुधः
शत्रुः शुक्रशनी समौ च शशभृत्सूनोःसिताहस्करौ॥३३३॥
मित्रे चास्य रिपुः शशीगुरुशनिक्ष्माजाः समा गीष्पते-
र्मित्राण्यर्ककुजेन्दवो बुधसितौ शत्रू समः सूर्यजः ॥
मित्रे सौम्यशनी कवेः शशिरवी शत्रू कुजेज्यौ समौ
मित्रेशक्रबुधौशनेःरविशशिक्ष्माजाद्विषोऽन्यःसमः॥३३४॥

